# कालो सूर्य

उपन्यास



लेखक :

भरत जङ्गम

❀ लेखक :

भरत जङ्गम

❀ प्रकाशिका :

इन्दिरा जङ्गम

जङ्गम निवास,

सहकारी क्षेत्र;

३/४५ बानेश्वर, काठमाण्डू । 



❀ यो पटक एक हजार प्रति

❀ चैत्र, २०३६ साल

मूल्य, रु० १०/-



❀ मुद्रक

अजय प्रिन्टर्स

कज्जाकपुरा, वाराणसी

फोन : ५२४९६

# आइतवार

धेरै दिनदेखि मेरो मनस्थिति असन्तुलित छ। यी गाउँ र शहरहरूको भविष्यसंग वर्तमानले खेलवाड गरेको देख्दा मलाई वर्तमानसंगै घृणा पैदा भएको छ। यो देशका प्रत्येक मानवीय जीवनसंग जोरी खोजिरहेको परि-स्थितिले मेरो हृदय कम्प गराइरहेछ। म भन्न अनि निश्चित गर्न सक्दिन धेरै दिनदेखि मलाई किन यस्तो भइरहेछ ? मेरा प्रत्येक अंग प्रत्यङ्गहरू कामेर जुरमुराउन खोज्छन् केही निश्चित बाटो पैलाउन। सुन्दर भविष्य तयार गर्न। तर पनि स्थिति यति विकराल छ—जहाँ म खुट्याउन पनि सक्दिन।

आज म सवेरै विम्झिएको छु। दैनिक कार्यतालीका अनुसार मेरो चिया आइपुगेको छैन। चिया आइपुग्न अझै दुइघण्टा बाँकी छ। चियाको लागि मलाई दुइघण्टा प्रतिक्षा गर्नु छ। मैले निश्चय गरें आजको विहान-को चिया मेरो साथी जीवन कहाँ पिउंछु। यो विचार गरी म घरबाट निस्किएँ।

जीवन मेरो धेरै पुरानो साथी हुन्। उनी एक सरकारी कार्यालयमा नायब सुब्बा छन्। काठमाण्डूको ठाँउ एउटा सानो डेरा, बस ! राम्रै छ। उनकी श्रीमती आफै खाना बनाउँछिन्। दुई बच्चा सा-साना स्कूलमा पठाउने बेला भइसकेको छ। जीवन आफिस जानु अघि र अफिसबाट फर्किएपछि छोरा-छोरीसंग भुल्ने गर्छन् किनभने उनकी श्रीमतीलाई उनले विहान वेलुका बच्चावाट फुर्सद पनि त दिनु छ। उनको पारिवारिक सुख देख्ता मलाई आरीस लाग्छ। कति रमाईलो वातावरण छ उनको घरमा। सबै काम विना नोकर टाकटुक सकिन्छ।

जीवनको कोठाको ढोका नपुग्दै अनायास मेरो खुट्टा रोकिन्छ। भित्र कोठामा दुइ लोग्ने स्वास्नीको बीचमा भएको गनगन सुन्न पुग्दें। मैंले जीवनलाई बोलाउने हिम्मत गर्न सकिन र त्यहाँ भन्दा अगाडि बढन पनि सकिन। ती दुइको कुरा-कानी मैंले तडकारो सुनिरहेको छु।

"तिमी किन कुरा बुझ्दैनौ बाबा ! मात्र कचकच गरी रहन्छौ। पैसा हुनेले वोर्डिङ्गमा पढाउन्, दार्जलिङ पठाउन र लण्डन पुऱ्याउन मलाई के को मतलब छ ? भएको खान देउ। घरमै पढ़ाउ। अर्को साल त्यो दोबाटोको प्राइमरी स्कूलमा भर्ना गरी दिउँला। मेरो प्रमोशन पनि हुन्छ र पैसाले पनि पुग्छ।"

"हजुरले पोहरसाल पनि त त्यसै भन्नु भएको थियो। छोरो छः वर्ष पुगिसक्यो, छोरी चार वर्ष पुगीसकी। कहिले स्कूल भर्ना गर्ने केही निधो भएन। वहाँ राम कृष्णका छोरा छोरी परारदेखि वोर्डिङ्गमा पढदैछन्। हजुर कै जस्तो सुब्बासाहेब दर्जा त हो नि उस्को।"

श्रीमतीले कुरा नबुझेकोमा जीवन झकंदै भन्छन्—"तिमी कस्ती अबुझ छौ। तिमीलाई थाह छ मेरो तलब कति छ ? त्यसबाट घर राम्रोगरी चल्छ कि चल्दैन ? कति मैना भइसक्यो चिया खान छोडेको, विहान वेलुका उसिना चामलले मात्र पनि तिम्रो पेट भर्न सकेको छैन भने कसरी यो साल केटाकेटीलाई स्कूल पठाउनु। भन्न सजिलो छ स्कूल पठाउने त हो नि। लुगा हाली देऊ, किताब किन, तिर स्कूलको फिस। अब तिमी कुरा गर्छौ राम कृष्णको। उसले किन नपढाउनु, त्रिभूवन एयरपोर्ट भन्सार कार्यालयको जागिरे ना. सु.। उसको दैनिक अम्दानीले उसकै तीन महीनाको तलबलाई जित्छ। त्यति मात्रै ? एक वर्ष टिक्यो भने जीन्दगीभर सुति सुति खान पुग्छ। अब हेरन, दुइ वर्ष अगाडि खरदार हुँदा तीन महीना बस्न पाएको थियो। उस्को स्टाण्डर नै अर्कै भयो। उसको कुरा गरेर पनि हामीलाई हुन्छ—भो नकराउ, भात पकाउन जाउ। आफिस जान अबेर हुन्छ।"

बढी उत्सुक हुँदै जीवनकी श्रीमती सोध्छिन्—"यो त्रिभूवन एयरपोर्ट भन्सार कहाँ छ ?"

कुरालाई टुङ्ग्याउन खोज्दै जीवन उत्तर दिन्छन्—"गौचर भन्सार के"

"तब हजुर पनि त्यहीं सरुवा हुनुपऱ्यो यो प्रोमोशन भन्दा।"

झर्कंदै जीवन भन्छन्—"अँ तिम्रो वावुको पेवा हो ! एयरपोर्ट भन्सार, भन्ने वित्तिकै सरुवा भइ हालु ?"

एक छिनको मौनतापछि जीवन बरबराउन थाल्छन्—"मेरा को छन् पावरमा ? कत्तैवाट नाता लाउँदा पनि सचिव आफ्नो नाता पर्दैन। चाकडी गर्न शुरू गरूँ, घरमा केटा-केटी नहेरे चुलो बल्दैन। दिउँसो आफिसमा केही कुरा गर्नै कुरै भएन। कोसेली-पात ओसार्न आफुसंग केही छैन। अनि म कसरी आम्दानी हुने अड्डामा सरुवा हुनु। अस्ति मात्र एकजनालाई आफ्नै टेबुलमा राखी महीनौं सिकाएँ सघाएँ अब त सचिवज्यू खुसिहुनुहोला, कर, अन्तःशुल्क र भन्सार कुनै ठाउँमा परौंला भन्ने ठूलो आशा बोकेको थिएँ। तर के गर्नु कर्ममा नभएपछि नहुँदो रहेछ। उही मैले सिकाएको केटो पो छांटी भन्सारको हाकिम हुन पुग्यो। अब एक वर्षपछि ऊ घर फर्कंदा बोक्न नसक्ने गरी रुपैयाँ भित्र्याउँछ। किन मौका नपाउनु त्यस्ताले ! सचिवज्यूको सालोको ज्वाइँ न ठहरियो। आशाले मानिसलाई बचाउँछ। चिन्ता नगर। मेरो पनि मौका आउला। त्यसपछि छोरा छोरीलाई वोर्डिङ्गमा पढाउँला, तिमीलाई सुनै सुनले सजाउँला। जाउ ! खाना वनाउन। साँढे छः वजी सक्यो।"

यही बीच छोरा छोरी रुनथाल्छन्। शायद केटाकेटी भरखरै विउँझिए। उनीहरुको कुराको विषय अर्कै तिर मोडिन्छ। जीवन भन्छन्—"आज पाउरोटी छैन चाँडो खाना वनाउ।"

म जीवनको घर नगएको धेरै भइसकेको थियो। वाहिर वाटोमा हिंडदा उसको मुस्कान छरिएका अनुहारसँग मात्र म परिचित रहेछु। जीवनको घरमा चिया वन्न छोडेको पनि त महीनौं भइसकेछ। केटाकेटीको लागि पाउरोटीसम्म नभएको जीवनको घरको विहान मैले चियाको आशा

राख्नु बेठिक सम्झें। फेरि जीवनलाई बोलाउन समेत हिचकिचाहट पैदा भयो। सोचें, दिउँसो कार्यालयमा भेट्न जान्छु।

जीवनसँग गाँसीएको आशा र धैर्यताले उसलाई डोऱ्याएकोसम्म छ। शायद बाँच्ने सहारा दिएको छ। काठमाण्डू शहरमा बसेर पनि ऊ वर्षौंसम्म छोरालाई पढाउन चाहँदैन। उसिना चामल पेटभरी खान खोज्दैन। आफ्नो बासको खोजि छैन उसलाई। यस्तै तर्क उठछ उसप्रति मेरो हृदयमा।

यतिकैमा म घर पुग्छु। सात बजेको छ। मेरो कोठामा चियाको प्याला आइपुग्छ। चियाको बाफ मेरो अनुहारको अगाडिबाट उडिरहेको छ। समय समयमा मेरो चुस्कि क्रमवद्ध छ कप नरित्तिएसम्म। मेरो आँखा अगाडि जीवन जस्ता मेरा सयौं दौंतरीहरू खेल्न थाल्छन्। कहाँ छन्? के छन्? कस्तो स्थिति छ? कसरी सहन गर्छन्? आदि आदि प्रश्नले मेरो रित्तो छाति कोरिन्छ। र म एउटा सिंगो प्रश्न वन्ने अठोट गर्छु यो वर्तमान समाजमा।

म जीवनको अफिसमा पुगेर सोध्छु—"दश बजिसक्यो, कर्मचारी कोही आएका छैनन्?"

"कसलाई भेटनु छ?"—एउटा अधवैंसे व्यक्ति मलाई प्रश्नात्मक उत्तर दिन्छन्।

"जीवन सुब्बा साहब"—मैंले आफ्नो खोजपूर्ण आँखा चारैतिर मेच, टेबुल र कोठामा घुमाउँदै भने—"सुब्बा साहव वस्ने कोठा यही हो?"

"हजुर!"—उनले मुन्टो हल्लाउँदं औंल्याउन थाले—"यहाँ खरदार साहेव वस्ने, यहाँ सुब्बा साहेव वस्ने, ऊ त्यहाँ भित्र उप-सचिवज्यू वस्ने।"

मैले हाँस्दै सोधें—"तपाईं कहाँ बस्ने त?"

उनी अलमलिए र एकछिन पछि जवाफ दिए—"कहाँ बस्ने र! पिउन जाबोलाई मेचमा वस्न पनि नपर्ने र वस्ने ठाउँ पनि छैन। कोठा बाहिर वसी रह्यो घण्टी बजाउछन् भित्र पस्यो। चिया भन्छन् चिया बनायो। चुरोट भन्छन् चुरोट ल्यायो। वस्न किन पऱ्यो र?"

उनले आफ्नो कामलाई त्यत्ति सजिलोसँग व्यक्त गरेकाले उनी प्रति मनमा झन उत्सुकता बढ्यो र मैले सोधें—"कतिवर्षदेखि तपाईं यहाँ काम गर्दै हुनुहुन्छ?"

"चौवीस पुगेर पच्चीस लाग्यो" नअलमलिइकन जवाफ दिए। एक टेबुलको कुनामा रहेको मेचलाई संकेत गर्दै भने—"बस्नुहोस् न त्यहाँ। सुब्बासाहेब को टेबुल पनि त्यही हो। म अर्को कोठा खोल्न जान्छु।"

खाली कोठामा म एक्लै छु। मेरो नजर कोठाका चारैतिर दौडन थाले। कोठामा स्टीलका तीनवटा बन्द दराज र त्यसमाथि अस्तव्यस्त कागजपत्र र फाइलहरू। कोठाको कुनामा हिटर चियादानी र कप-प्लेटहरू र भित्तामा क्यालेन्डर छन्। पर्दा भएको एक ढोकामा पर्दाको च्यापवाट उप-सचिवको कोठाको एक रिवालभिंग चेयर र टेबुल मात्र देखिन्छ। प्रवेश निषेधको वोर्ड झुन्डिएको छ। त्यहाँ वस्ने उप-सचिव कस्ता होलान् ? प्रश्न कोरिन्छ मेरो दिमागमा। यत्तिकैमा जीवनको आवाज सुनिन्छ—"कृष्ण वहादुर !" जीवन कोठामा प्रवेश गर्ने वित्तिकै मलाई देख्दा झस्कन्छन् र भन्छन्—"अहो वहाँवाट यहाँ ? धेरै काल भयो भेट पनि नभाको !"

"अँ। तिमीलाई नै भेटुँ भनेर। दशै वजे आइपुगेको थिएँ।" प्रफुल्ल मुद्रामा जीवनले भने —"हेरन ! घरवाट साँडे नौ वजे निस्किएँ। वस चढन पनि आफिस समयमा ज्यादै भीड़। म त हिंडेरनै आउँछु। जति चाँडो आउँभने पनि सवा दश—साढ़े दश भइहाल्छ। चाँडो आएर पनि के गर्नु। उप-सचिवज्यू एघार नवजी आउनुहुन्न। उहाँ नआए कामै छैन।"

जीवन दराजतर्फ लम्किए र दराजवाट चार-पाँचवटा फाइल निकाली आफ्नो टेबुलमा राखे। त्यत्तिकैमा कृष्ण वहादुर कोठामा प्रवेश गरेर भने—"हजुरले मलाई वोलाएको ?"

कृष्ण वहादुरलाई चिया तयार गर्ने संकेत गर्दै जीवन भन्छन्—"खरदार साहव आउनु भएको छैन ?"

"आज उहाँलाई उप-सचिवज्यूले काममा पठाउनु भएको छ। हिजै अफिस आउन्न भनेर भन्नु हुन्थ्यो। सुब्बा साहेवलाई थाहा छैन ?"—कृष्ण वहादुर ले भने।

"के भन्नु ? कर्मचारीहरूलाई त यी हाकिमहरूले बाँधा जत्तिकै सम्झन्छन् महीनामा पन्ध्र दिन त उनकै काम गर्नु पर्छ"—लामो सास लिदै

जीवन भन्छन्—"के गर्नु सरकारी कार्यालयमा नोकरी गरेको छु भनेर नाक फुलाउनु पनि वेर्थै हो। नगरूँ भने हाकिम रिसाइहाल्ने, हाकिम रिसाए-पछि सरुवा हुने वा राजिनामा दिने बाहेक अरू कुनै उपायनै रहँदैन। हाकिमलाई खुशी तुल्याए रेकार्ड पनि राम्रो हुने आफूले सहुलियत पनि मनग्गे पाइने। फाइदा हेर्नु कि वेफाइदा हेर्नु, भन्नुहोस् त ?"—मतर्फ हेर्दै जीवन आफ्नो मनको गरुङ्गो भारी विसाउँछन्।

म अलमलमा छु। कार्यालयको रीति स्थिति आफूले नवुझेको। आफूले नभोगेको। यसै हो भन्न पनि नसकिने। तर जीवनले भने मैले पनि वुझेकै जस्तो गरी वयान गरे। केवल प्रश्नवाचक आँखा जीवनका अनुहारमा परे। मैले केही जवाफ दिन सकिन।

"आज सचिवज्यूले यो फाइल वनाएर ल्याउनु भनि भन्नु भएको छ। आफ्नो विवेक र बुद्धिले भ्याएको कुरा लेखिसकेको थिएँ। तर उहाँलाई चित्तवुझेन। अव म यो फाइल कसरी वनाउँ ? मेरो दिमाणले काम दिएको छैन"—जीवनले हातवाट फाइल टेवुलमा राखी टोपी हल्लाउन थाले र भने—"उहाँले भने जस्तो गरौं भने मेरो विवेकले दिंदैन, नगरूँ भने यस-वाट फुर्सद पाइएन।"

अझै उनको कुरा मेरो समझभन्दा टाढा छ। म केही वोल्ने स्थितिमा छुइन। यसैवीच जीवनले मलाई सोधे—"विशेष केही थियो कि ?"

तुरून्त उनलाई मैले केही जवाफ दिन सकिन किन कि उनलाई भेट्ने मेरो विशेष केही थिएन। म त केवल जीवनको घरको विहानको गन्थन सन्दर्भमा उनलाई भेट्ने इच्छा थियो। उनको वारेमा केही जान्ने उत्सुकता वोकी उनको कार्यालयसम्म आएको हुँ।

उनलाई मैले घवराहटमा नै भनें—"विशेप त केही थिएन। वस ! तिमीलाई भेटुँ। धेरै भयो भेट नभएको, त्यसैले।"

म पूर्णरूपमा नखुलेकोमा उनलाई आश्चर्य लाग्यो होला। किनभने केही वर्षअघि हामी सारै मिल्ने साथी मध्येका हौं। आज परिस्थितिले हामी-

लाई संकोच पैदा गरेको छ। जीवन एक जिम्मेवार कर्मचारीको साथै एक घरको जिम्मेवार मालिक पनि हुन्।

जीवन फेरि दोहऱ्याउँछन्—"केही त अवश्य होला ?"

यसै बीच कृष्णबहादुरले दुइ कप चिया टेबुलमा राख्छन्। कुरा थाल्ने विन्दु तयार हुन्छ "चिया"।

मैले भनें—"भरखर खाना खाएर आएको होइन र? अहिले चिया पिउने ?"

जीवन अलि रोकिंदै जवाफ दिन्छन्—"अँ! विहान खाना खान रूच्दै रूच्दैन। फेरि अफिसमा आएपछि चिया खाने आदत पनि बसी सकेको छ। के गर्नु, यो चिया पनि सरकारी सहुलियत मध्येकै हो। यसको उपभोग गर्नु पर्छ नै। हामी जस्ता साना कर्मचारीलाई विशेष के सहुलियत छ र। यो पनि त हाकिमको तजविजको कुरा हो। पाउनुपर्छ भन्ने केही छैन। हाकिमलाई मनलागेन भने भोली रोक लागीहाल्छ।"

सहुलियतको चियामा मेरो हात पर्छ। चियाको चुस्कीसंगै मेरो ध्यान विहानको वार्तालापमा केन्द्रीत हुन पुग्दछ। जीवनले शायद खाना खान मन नभएर कम खाएको होइन। ना. सु. को जागिर, काठमाण्डूको बसाइ, घटीमा एकसय पचास घर भाडा, कति नै पुग्दो हो र चार प्राणीको लागि। उसिना चामलै खाए पनि चारजनालाई महीनामा सत्तरी के. जी. लागिहाल्छ। तरकारी, नून, तेल, मसला लाग्ने नै भयो। यो त महीनाको खर्च भयो। वार्षिक खर्चमा चाड-पर्व, लुगाफाटो र आउना-पाउना हिसाव गर्दा; म त जीवनको घरको वजेटै बनाउन असमर्थ छु। कसरी चलाएका छन् ?

टेबुलको दुइ तर्फबाट आएको चियाको चुस्कीलाई चिर्दै म भन्छु—"जीवन ! तिमीले जागिर खाएको कति भयो होला ?"

"यस्तै दश वर्ष। तिमीलाई थाहै छ। जब मेरो घरबाट पैसा आउन छोड्यो। मैले आफ्नो कलेजको पढाईलाई बाध्य भएर रोक्नु पऱ्यो। यी नै मेरा हाकिम उप-सचिव हाम्रै क्लासका साथी शिवनाथ शर्मा हुन्।

उनका रुपैयाँ वलिया थिए, उच्च शिक्षा हासील गरे। उनले जागिर खाएको छः वर्ष त भयो। उनी मेरो हाकिम छन्। जागिरको दृष्टिकोणले उनी भन्दा म चार वर्ष जेठो छु। दर्जाको दृष्टिकोणले म भन्दा उनी दुइतह वढी छन् र तलवको हिसावले मेरो भन्दा तीन गुना वढी छ।"

"ए ! उही शिवनाथ"—मैले भनें—"उनका बाउ काफी धनी थिए रे ! राणाका पालाका डिट्ठा ! पकनाजोलमा घर हुने होइन ?"

"हो, उनै"—जीवनले निराशापूर्वक जवाफ दिए—"के गर्नु, उनको घरमा साथी भएर गएका थियौं। आज भोली उनको नोकरको रूपमा विजुलीको पैसा तिर्ने टेलिफोनको पैसा तिर्ने र चाड-वाडमा किन मेल गरी दिनुपर्छ।"

मैले जीवनलाई भनें—"आफ्नो साथी हाकिम भएका अड्डामा त झन् राम्रो हुनुपर्ने होइन र ?"

जीवन भन्छन्—"हाम्रो यस सरकारी अड्डाको परम्परानै यस्तो छ कि हाकिमको हातमा नै कर्मचारीको जीवन हुन्छ। हाकिमलाई कुनै कर्मचारी मन परेन भने त्यसलाई सताउने अनेक नियम उपनियमको व्यवस्था छ। फेरि अर्कोतर्फ कुनै नियम उपनियम नभए पनि हाकिमले चाहेमा हाकिमको माथिको हाकिमको हवाला दिंदै हाकिमले पेल्ने परम्परा छ। त्यसैले यस भित्र सवै छिर्नै पर्छ। नछिरी घरै छैन। फेरि हाम्रो हाकिमले पनि माथिको हाकिमलाई रिझाउनुपर्छ। हाकिमले चाहेमा महीनौं दिनमा हामीलाई लखपति वनाउन सक्छन्। यो वास्तविकता हो। त्यही आशामा हामीले उनीलाई रिझाउनुपर्छ। यो हाम्रो परम्परा नै भइसकेको छ।"

जीवनसंग म धेरै कुरा सोध्न चाहेर पनि सोध्न सक्दिन। हाम्रो मित्रतामा कुनै कमी छैन तर पनि म सोध्न सक्दिन। जीवनको वास्तविकतासंग त अव म धेरै टाढा छुइन। म उनको मुखबाट नै सुन्न पाए पूर्णता सम्झन्छु। उनी फाइल लिएर सचिवज्यूकहाँ जाने तरखरमा छन्। यत्तिकैमा हामीतर्फ हेर्दै नहेरी शिवनाथ आफ्नो कोठामा प्रवेश गर्दछन्।

साथै जीवन पनि आफ्नो सलामी चढाउन कोठामा प्रवेश गर्दछन् । केही क्षणमै जीवन कोठामा आई मलाई भन्छन्—"म यो फाइलको काममा सचिवज्यूकहाँ जान्छु, तिमी तबसम्म शिवनाथजीसंग कुराकानी गर। म आइपुगिहाल्छु।"

जीवन चाँडै आउने आश्वासन दिंदै मसंग विदा हुन्छन् । मलाई शिवनाथ भेट्ने कौतूहल जाग्छ । कृष्णवहादुरलाई बोलाई शिवनाथ-कहाँ आफ्नो नामको स्लिप पुऱ्याउने संकेत गरें । मेरो अनुरोध अनुसार कृष्णवहादुरले स्लिप पुऱ्याए तर शिवनाथले मलाई तुरुन्त बोलाएनन् । एकै-छिन बसन भनी पठाए । कृष्णवहादुरप्रति मेरो ध्यान आकर्षित भयो ।

हाकिमको घण्टीको तालमा भित्र बाहिर गर्ने सिपालु कृष्णवहादुरले जागिर खाएको पच्चीस वर्ष भएछ । उनी जुन वखत जागिरे थिए शायद शिवनाथले बारखरी खारेका थिएनन् होला । सरकारी कार्यालयमा पिउन-भन्दा मुनिको दर्जा त अवश्य छैन । यसैले कृष्णवहादुरले शुरूमै पिउनमा जागिर खाएको हुनुपर्छ । र शायद पिउनबाट नै अवकाश पाउँछन् । 'यो कस्तो निजामती नियम हो ? पिउनमा जागिरे हुन नेपाली लेखापढी चाहिन्छ तर सिपाही र पुलिसमा भर्ति हुन भने अनिवार्य छैन । पुलिसमा शुरूमा कन्स्टेवलमा भर्ना भएको इन्स्पेक्टर र एस. पी. हुन कुनै रोक छैन । सिपाहीमा भर्ति भएको पेन्सन पकाउँदा सुवेदार र लप्टन हुन सक्छन् । तर पिउनको नोकरी पच्चीस वर्ष हुँदा उसको एक तहसम्म नबढ्ने । सुनेको थिएँ राणाको पालामा सिपाही र लेख्न जान्ने सिपाहीको वर्गिकरण गर्दै नौसिन्दा हुँदै वहिदार हुन्थे रे !' उनी आफ्नो पदमा रमाएकै देखिन्छन् । कार्यालयमा पनि सबैभन्दा चाँडै उपस्थित हुनसक्छन् सबैभन्दा पछि-सम्म पनि उनी नै बस्छन् ।

नेपाली वेषभूषामा एक युवक कोठामा प्रवेश गर्छन् । यिनी यसै कार्यालमका शाखा अधिकृत हुन् भन्ने कुरा एउटा सुसज्जित टेवुलमा गएर बसेपछि मैले निश्चय गरें । आफूले नचिनेको अनुहार भएको हुँदा उनीतर्फ म आकर्षित हुने आवश्यकता ठानिन । केही क्षणमा उनी शिवनाथ-

  

को कोठामा प्रवेश गरे। शिवनाथले उनलाई अवेला भएको कारणको सोधाइको उत्तरमा भन्न लागे जो म स्पष्ट सुन्न सक्दिन।

"सचिवज्यूको छोराको ………… जावलाखेल ………… सेन्ट जेवियर्स ……भिड वस………"

शाखा अधिकृत वाहिर कोठामा आउँछन्। शिवनाथको कोठाबाट वोलावटको विद्युत घण्टी वज्छ। घण्टीको आवाज नटुङ्गीदैं कृष्णवहादुर हुत्तिएर कोठाभित्र पस्छन्। कोठावाट वाहिर आई मलाई कोठाभित्र प्रवेश गर्ने संकेत गर्दछन्।

म कोठाभित्र प्रवेश गरी शिवनाथसंग हात मिलाई औपचारिकता पूरा गर्छु। शिवनाथले मसंग खुलेर वस्न सकिरहेका छैनन्। हुनसक्छ, उनलाई आफ्नो पदको घमण्ड छ। मलाई लाग्छ, उनले असजिलो महसूस गरी रहेका छन्। शिवनाथको आँखा टेवुलको चारैतर्फ घुमिरहेछ मानौ केही हराएको वस्तुको खोजमा आँखा दौडिरहेछ। कोठामा छाएको मौनताको पर्दा खिच्दै मैले भने—"शिवनाथजी ! तपाईं यहाँ हुनुहुन्छ भन्ने कुरा मलाई थाहै थिएन। कहिलेदेखि तपाईं यहाँ ?"

"प्रमोशन भएदेखि, करीव एक वर्ष हुन लाग्यो"—शिवनाथ वडो गम्भीर मुद्रामा उत्तर दिन्छन्।

हामी दुइको कुराकानी नभएको पनि धेरै समय भइसकेको थियो। हिजो र आजको शिवनाथमा आकाश-जमिनको अन्तर छ। औपचारिक कुराकानी टुङ्गिनलाग्दा पनि उनी राम्रोगरी मसंग खुल्न सकेका छैनन्। मैले जव विद्यार्थी जीवनका केही सम्झना फुकाउँदा उनमा केही स्पष्टता देखिन थाल्यो। मेरो वारेमा उनको सोधाई विशेष थिएन। मैले खुला हृदयले आफ्ना अतितका दिनहरूको वयान गरें। मेरो भविष्य सम्वन्धमा निश्चितता नभएको व्यहोरा सुनाएँ। साथै शिवनाथलाई मैले सोधें—"कुन कुन कार्यालयमा काम गर्नु भयो ? अव कहीं सरुवा हुने विचार त छैन ?"

"लोकसेवाले यसै मन्त्रालयमा छःवर्ष अगाडि खटाएको थियो। एक वर्ष यसै मन्त्रालयमा काम गरें। त्यसपछि अन्तः शुल्क, कर कार्यालयहरूमा दुइ

दुइ वर्ष काम गरें। अब पाए वीरगंज या विराटनगर भन्सारमा जाने तरखरमा छु।"—शिवनाथले आफ्नो कुरालाई पुष्टिदिदै भने—"यो मन्त्रालयमा बसेर के गर्नु? दश पाँचबजाउने मात्र काम छ। छ भनुँ भने पनि छैन, छैन भनुँ भने पनि एक दुइ तलबाट आएको फाइल माथि फरवार्ड गर्ने। यति त हो। यही मन्त्रालयमा बसी रह्यो भने मानिसको मानसिक, शारीरिक र आर्थिक शक्ति क्षीण हुन्छ। म त चाहन्छु कुनै व्यस्त हुने कार्यालयमा जाउँ। हेरौं! के हुन्छ?"

शिवनाथको चित्तवृत्ति सहजै बुझ्ने मौका पाएँ। मप्रति उनको संकोच हराए जस्तो छ। संकोच लिनुपर्ने अवस्था पनि त छैन। म एक साधारण नागरिक, मेरो अगाडि शिवनाथ जस्ताले आफ्नो गुणगान गाएर सुनाउँदा उनकै मूल्य बढ्दछ। मैले पनि यही मौकामा कुरा थपें—"चार वर्ष सम्मको अन्तःशुल्क र कर कार्यालयको अनुभवले निश्चय पनि तपाईंलाई भन्सार कार्यालयमा काम गर्न योग्य तुल्याएको होला?"

"यहाँ अनुभवको आधार कहाँ हेरिन्छ र?"—शिवनाथ आफ्नो बारेमा स्पष्टीकरण दिन्छन्—"लोकसेवाले यहाँ मलाई खटाउँदा कत्रो सोर्स लगाउनु पऱ्यो। मेरै बुवाले तालिम गरेका व्यक्ति लोकसेवामा रहेछन्, उनकहाँ बुवा आफै गई जसरी पनि अर्थ या परराष्ट्रमा पार्न कोशिश गर्दा पो म यहाँ शिफारिस भइ आएँ। यहाँ आएर पनि मलाई एक वर्षसम्म कुनै कामको जिम्मा दिइएन। पछि वडो कोशिश गरी अन्तःशुल्कमा गएँ तब मात्र मेरो जीन्दगीको बाटो राम्रो गरी बन्यो।"

मैले मनमनै विचार गरें शिवनाथले अन्तःशुल्क र करमा बस्दा मनग्गे पैसा कमाएको हुनसक्छ। अब फेरि भन्सारमा जाने ताकमा छन्। आर्थिक स्थिति वडो बलियो बनाउने तरखरमा लागेका शिवनाथ पैसा नकमाइने अड्डा र पैसा नकमाइने मानिस वेकम्मा ठान्दारहेछन्। उनको प्रस्तुतीकरणमा मेरो कुनै प्रतिक्रिया छैन। यसै सिलसिलामा मैले सोधें—"तपाईंको तलब कति आउँछ?"

उपहासको मुस्कान दिदै भने—"कति भन्नु चुरोटसम्म महीना भरी पुग्छ। त्यही चारसय चानचुन हात पर्छ। घर बनाउन तेजारथ सापटी लिएको थिएँ, कट्टा भई हाल्छ। फेरि संचयकोष कट्टी गर्दा त केही हात पर्दैन भने पनि हुन्छ।"

"घर कहाँ बनाउनु भयो ?"

"ठमेलमा बनाएको छु। सरकारी सापटीको रकमले जग्गा किन्न पनि पुगेन।"—खुशीको लामो सास फेर्दै भने—"दुइ लाख जति आफूसँग थियो एउटा सानो बंगला बनाएँ। घरको अंश केही लिइन मैले त।"

"छोरा भएर पैतृक सम्पत्तिको आश गर्नु राम्रो पनि त होइन"—मैले उनको कुरामा जोड़ दिदैं भने—"जे छ दुःख जिलो आफैंले गर्नु वेश होइन र ?"

शिवनाथको विचारको विपरीत मेरो विचार व्यक्त छैन। उनलाई अब एक कार किन्ने सारै ठूलो धोको बाँकी रहेछ। यतिमात्र होइन त्यसलाई प्रयोग गर्न सक्ने क्षमता हासिलगर्नमा पनि उनी निश्चित छन्। उनलाई उनको हाकिमप्रति पूर्ण विश्वास र भरोसा छ कि निकट भविष्यमैं उनी भन्सारको हाकिम हुन जाँदैछन्।

मैले सोधें—"वीरगंज र विराटनगर भन्सारमा कुन राम्रो छ ?"

"त्यस्तै हो दुवै ! अझ विशेष वीरगंज राम्रो छ किनभने काठमाण्डूको ढोका हो त्यो।"

"ए ! यसको मतलब त्यहाँ बढी राम्रो भए त्यहीं जानुपर्छ।" म अझ उनको कुरा लाई पुष्टि गर्छु।

"कर र अन्तःशुल्कमा बसुन्जेल चौबीसघण्टा त्रासमा बाँच्नु पर्ने। भन्सारमा त माथिसम्म थाह भएको कुरा हो। तलदेखि माथिसम्म दर्जा अनुसार भाग लगेर आउने कुरा कुरा, कसलाई थाहछैन र ? कम-वेशी सम्म मात्र हो। फेरि इच्छा लाग्यो भने अनुचित नै गरे पनि मालामाल। यो कुरा त राणाको पालादेखि चलिआएकै कुरा हो।"

"अनुचित कार्य नगरीकनै आउने त उचित नै भयो"—म उनको कुरालाई बढावा दिदै भन्छु - "कस्तो आम्दानी छ त्यहाँ ?"

"यही महीनाको अठार हजारदेखि बीससम्म पुग्छ। अरू त के कुरा, जावो कारीन्दो बहिदारको भागमा चारहजार पर्छ। फेरि तलब बाँडेको भोलीपल्ट एकाउण्टेटले नै त्यो सलामी रकम बाँड्छन्। यसले गर्दा कसै-द्वारा छुपेको छैन। अनुचित रकम भन्न पनि नमिल्ने। त्यसैले त मेरो पूर्ण कोशिश त्यसैमा छ।"

टेबुलमा भएको टेलिफोनको घण्टीले हाम्रो कुरालाई रोकिदिन्छ। शिवनाथले हातको इशाराले 'एकछिन' भन्दै आफ्नू हात टेलिफोनमा बढाउँछन्।

"हेलो""हजुर, नमस्कार हजुर''''''" ! टेलिफोनमा शिवनाथ बोल्दै जान्छन्—"हजुर'''मैले जीवनलाई भनेको थिएँ'''त्यहीं फाइल लिएर आएका छन् हजुर'''हजुर'''उसको दिमागले भ्याउँदैन। म यहाँ सेक्सन अफिसर र जीवनलाई गर्न लगाइदिन्छु पठाइबक्सियोस्'''हजुर हजुर''' नमस्कार हजुर।" टेलिफोन राखेर मतिर हेर्छन् र भन्दछन्—"सचिवज्यूको कुरा कर्मचारी नबुझ्ने, कर्मचारीको कुरा सचिवज्यू नबुझ्ने। आफू परें बीचमा दुवैको मध्यस्थता गर्नु पर्ने।"

विषयबस्तुसँग आफू परिचित नभएको हुँदा केही नबोली उनको कुरामा सम्मतिसम्म जनाएँ। यत्तिकैमा जीवन कोठामा प्रवेश गर्छन्। जीवन मलाई हेर्दैनहेरी टेवुलको अर्को छेउ, शिवनाथको कुर्सीको छेउमा गएर उभिए। फाइलको विषय सम्बन्धमा आफ्नू मन्तव्य व्यक्त गर्नलागे—"यो फाइलमा सचिवज्यूले भने जस्तो गर्न आर्थिक नियमले दिदैंदिदैन। म कसरी आर्थिक नियम विपरीत लेखौं ? सचिवज्यू भन्नुहुन्छ—नियमसियम सबै मिलाएर ल्याउनु—नियममा उहाँले भनेजस्तो छैन। लौ विचार गर्नुहोस् हाकिम साहेव, ठेक्काको काम सम्झौता अनुसार समाप्त भइसक्यो। पाउने रकम ठेकेदारले पाइसक्यो। अब यो नचाहिंदो दावी कसरी श्री ५ को सरकारले स्वीकार गर्ने ? पचास-साठी हजार भए एउटा कुरा, असी

लाखको दावी, खै ! म त केही विचार गर्न सक्दिन। हामी त सानो कर्मचारी जागीरको भरमा जीवन बचाउनु पर्छ। भोलि वि० प्र० वि० अथवा अख्तियार दुरुपयोगले छान-बीन गऱ्यो भने के बुझाउने ? लौ हाकिम-साहेब तपाईं नै विचार गर्नुहोस्।"

"खै, फाइल ल्याउनुहोस्"—शिवनाथ जीवनको हातबाट फाइल समात्दै फाइल पल्टाउन थाल्दछन् र भन्दछन्—"सचिवज्यूले आज्ञा भएको कुरामा तपाईं धेरै तर्क नगर्नुहोस्। तपाईंको गए सानो जागीर, सचिव-ज्यूको गए विचार गर्न सक्नुहुन्छ ? ऊहाँले भनेपछि हामीले कुनै हालतमा पनि मिलाउनुपर्छ। फेरि निर्णय गर्ने अधिकारी सचिवज्यू हो। सचिवज्यू त केवल एकै मंत्रालयमा एकै फाइलको टिप्पणीमा राय नफाटोस् भन्नेसम्म चाहनुहुन्छ। आफै फस्ने काम उहाँ निश्चय पनि गर्नुहुन्न। फेरि फसे नै पनि उहाँलाई नेपालमा केही गर्न सक्ने कसैको ताकत छैन। उहाँ कसको मान्छे तपाईंलाई के थाहा ? जेहोस् हामीले नून खाएका छौं, उहाँको आज्ञा शिरोपर गरी काम गर्नुपर्दछ।"

केही मिनेटको फाइलको अध्ययनपछि शिवनाथजी भन्दछन्—"लौ, लेख्ने बाटो पाइहाल्नुभयो। यस किसिमबाट लेख्नुहोस्। निर्माण यातायात मंत्रालयले पनि दिनपर्ने किसिमको राय दिएकै रहेछ। यसैको आधारमा—सम्झौता अनुसार ठेकेदारले काम सक्नुपर्नेमा बढ्दै गएको मँहगाई र नक्शा इस्टिमेट भन्दा केही बढी काम ठेकेदारले गर्नुपर्ने समेत ठेकेदारको मिति-मितिको पत्रबाट ज्ञात हुन आएको र सम्बन्धित मंत्रालयको समेत दिनपर्ने किसिमको राय भएको हुँदा आर्थिक नियममा उल्लेख नभएको परिस्थिति सृजना भएकोले हाल एक पटकलाई ठेकेदारको दावी बमोजिम असी लाख दिनुपर्ने देखिएकोले निकासाको लागि व्यहोरा प्रस्तुत गर्दछु।—भनेर लेखि-दिए भइहाल्छ। तपाईं हाम्रो घर-घरानाबाट जाने होइन, दिनेले दिन इच्छा गरेपछि तपाईं हामीलाई के टाउकोदुखाइ ! जानुहोस्, आजै फाइल पेश गर्नुपर्छ।"

शिवनाथको सजिलो वयान जीवनको मस्तिष्कमा घुसेको छैन । जीवन फाइल समात्नसम्म पनि हिचकिचाएका छन् । शिवनाथको दुइ-तीन पटकको आदेशपछि फाइल समाती केही नबोली जीवन कोठावाट वाहिर निस्कन्छन् ।

शिवनाथ हाँस्दै भन्दछन्—"जीवन हाम्रो सहपाठी हो । चिन्नु भएन ? कस्तो कुरा नवुझ्ने ! त्यसले त उसको उन्नति भएको छैन । जागीर खाएको दश वर्ष भइसक्यो ।"

टेलिफोनको घण्टी वज्दछ । शिवनाथ टेलिफोनमा वोल्न शुरू गर्छन्—"हेलो नमस्कार हजुर ! हजुर, लगाइसकें · हजुर ·· हजुर · हजुर आजै पेश हुन्छ हजुर हजुर ··हवस् । म आइहालें · नमस्कार हजुर ।"

मतिर हेर्दै शिवनाथ भन्छन्—"मलाई सचिवज्यू कहाँ जानुपर्‍यो । भोलि-भोलि आउनुहोस् न । गफ गरौंला । अहिले म जाउँ कि ?"

शिवनाथ र म कोठावाट वाहिर निस्कियौं । शिवनाथ गए र म वाहिरको कोठामा अलमलिएँ । जीवनले उनको टेवुलको मेचमा वस्ने संकेत गरे । त्यहीं वसें । शाखा अधिकृतको नजरमा म नौलो भएको हुँदा जीवन र मेरो अनुहार वारम्वार हेरिरहन्थे । यसै वीच जीवनले मेरो परिचय शाखा अधिकृतलाई दिन्छन्, मलाई शाखा अधिकृतको । मैले गरेको नमस्कारको प्रतिउत्तर खुशी मुद्रामा नमस्कार फिर्ता गर्छन् । हाम्रो साधारण कुरा शुरू हुन थाल्दछ । उनी पनि नोकरीमा भरखरै प्रवेश गरेका रहेछन् । तीन वर्षमात्र भएको रहेछ । सरसरती हेर्दा साधारण पोशाक, कुनै तड़क-भड़क छैन । मलाई लाग्छ—यिनले जागीरको रस-रंग पाएका छैनन् । यिनी सुक्खा तलवमा आश्रित छन् ।

शाखा-अधिकृतलाई सम्वोधन गर्दै जीवन भन्दछन्—"भन्नुस् हाकिम साहेव, यो फाइल कसरी वनाउने सचिवज्यूको अनुकूल ?"

"हेर्नुस् सुव्वा साहेव ! तपाईं जस्तो टिप्पणी लेख्नुहुन्छ म त्यसैमा दस्तखत गरी माथि पठाउने हुँ । फेरि तपाईंलाई उप-सचिवज्यूले भनी सक्नुभएको छ भने फेरि किन यस विषयमा वादविवाद गरिरहने । जागीर खान मन छैन भने राजीनामा लेख्ने हो, खान मन छ भने भनेजस्तो गर्ने

हो। विनासित्तिमा समय बरबाद गरेर केही फाइदा छैन।"

जीवन बोल्दै नबोली फाइल पल्टाइ टिप्पणी ड्राफ्ट गर्न शुरू गर्न लागे। नगरेर पनि के गर्नु ! जीवन नोकरीसँग जोरी खोज्न सक्दैन। जागीर छोडेर गर्ने पेशा उनको केही छैन। जीवनको लागि नायब सुब्बाको जागीर सिङ्गो जीवन हो।

यस कोठाको गनथन र समस्यासँग मलाई केही चाख छैन किनकि यो मेरो विषय नै होइन र मेरो सूझ-बूझ भित्र पस्न पनि सक्दैन। मलाई त केवल वर्तमानको जीवनसँग मात्र वास्ता छ। यसै प्रसंगमा मलाई शाखा-अधिकृत कृष्णगोपालजीसँग केही सोध्ने उत्सुकता बढ्दछ। कृष्णगोपालजी-लाई सम्बोधन गर्दै म भन्दछु—"कृष्णगोपालजी ! जागिरे जीवन तपाईं-लाई कस्तो लाग्यो ?"

मेरो प्रश्नले उनको अनुहारमा गम्भीरता छायो, उनले तत्काल उत्तर दिन सकेनन्। फेरि मलाई मेरो प्रश्न दोहोराउन आग्रह गरे र मैले प्रश्न दोहराएँ। उनको अनुहारमा ज्वार-भाटा पैदा भयो। उनले गम्भीर स्वरमा भने—"बडो कठिन प्रश्न गर्नु भयो तपाईंले।"

मैले हाँसेर भनें—"कुनै अपठ्यारो महसूस गर्नु भएको छ भने भँगो। मैले यसकारणले जान्न चाहेको कि यदि रमाइलो रहेछ भने म पनि जागीर खाने तरखर गरौं भनेर। अरू विशेष केही होइन।"

कृष्णगोपालजी भन्दछन्—"कुनै अपठ्यारो त छैन मलाई। तर तपाईं-को तीन सेकेण्डको प्रश्नमा मेरो तीन घण्टाको उत्तर छ। त्यसैले मैले भन्न हिचकिचाएको। सरकारी उच्च ओहदामा तपाईंका कोही नजीकका नातेदार छन् भने जागीर खानुहोस्। होइन भने कुकुरले नपाएको दुःख पाउनु हुन्छ। अँ, अर्को उपाय एउटा छ। यदि तपाईं तेल-वेसार घस्न सिपालु हुनुहुन्छ भने पनि हुन्छ।"

जीवन बीचैमा बोल्छन्—"सोझै भनिदिनुस् न हाकिमसाहेब—तीन 'च' अर्थात् चाकड़ी, चुक्ली र चम्चागिरी।"

जीवनले व्यक्त गरेको तीन 'च' को अर्थले ममा हाँसो फुटायो। तीनै-

जना हाँस्न लाग्यौं । कोठाको वातावरण नै रमाइलो हुनलोगेको थियो । जीवनको अनुहारमा गम्भीरता छायो । उनी उही ठेक्का सम्बन्धी फाइल केलाउँदै छन् । उनको अनुहारमा मेरो नजर पर्ने वित्तिकै स्थिति विषयमा मलाई सोच्न कर लाग्यो —कस्तो परिस्थितिमा जीवनका दिन गुज्रिरहेका रहेछन् । उनले यस्ता दिनहरू हजारौं विताइसके । धन्य हो सहनशीलता र सहिष्णुताको लागि । मानिसले मौकाको परखाइमा कति कष्ट सहनु पर्दो रहेछ । अभावको दौड़मा चलेको घरमा उनलाई के शान्ति मिलेको होला र अनुचितताको कार्य-तालिकामा चलेको कार्यालयमा उनलाई के आराम मिलेको होला । तथापि उनले नरमाएको कुनै संकेत देखिदैन किनभने उनी नेपाली हुन् । गाउँ र शहरको हावामा सम्मिश्रण एउटा जीवन ।

जीवनलाई फाइल कोर्न वाध्य गराउने हाकिमहरूको मनोवृत्ति सम्बन्ध-मा खोज्ने र जान्ने कुनै अधिकार छैन उसलाई । उसको विवेकले सरकारी राजस्वको असी लाख दिन चाहँदैन । विवश छ ऊ । नचाहेर पनि उसले लेख्नु छ । टिप्पणीको शुरूआत गर्नु छ । दैनिक दश रुपियाँमा विकेको जीवन । उसले सिंगो जीवनलाई बेचेको छ ।

जीवन फाइलमा आफ्नू काम समाप्त गरी शाखा-अधिकृतको टेवुलमा फाइल दिंदै भन्छन्—"लौ, माथि पठाउनुहोस् । जागीर जोगाएँ मैले त ।"

कृष्णगोपालजी फाइल पल्टाउँदै भन्छन्—"यति गरे अनुसार अन्तःशुल्क या कर कार्यालयमा जान पाइयो भने त वेशै भयो ।"

कृष्णगोपालको आशावादी वाक्यसंग सहमती जनाउँदै जीवन भन्छन्—"कोशिश गर्नुहोस् हाकिम साहेव सवरा हुन भन्दा तपाईं गर्नु हुन्न । तपाईं-लाई वसी-वसी कसले दिन आउँछ ?"

"त्यही न भयो । के गर्नु जीवनजी ! भनेको त हो नि, नहुने । तपाईं हाम्रो कोही भएको भए यसरी थच्चिएर वस्नु पर्थ्यो ? हेर्नुहोस् न हरिकान्त, भर्ना हुने वित्तिकै अन्तःशुल्कको पनि डिस्टिलरी शाखामा खटिए । मोहर आफूले लगाउन पनि नपर्ने, घरमा वसी-वसी महीनाको पच्चीसौं हजार वुझाउन पनि ल्याउने । अव उसले एम० ए० पास गऱ्यो भन्दा केको उदेक ।

हाल फेरि सप्तरीको मालपोत कार्यालयमा सरुवा भएको छ। केही नभए पनि वर्षको पाँच लाख भित्र्याइहाल्छ। त्यही सरहका हामीलाई एक छाक मीठो गरेर मासु खान त परै जावस् असनको तरकारी खानसम्म रहर छ।"

जीवन भन्छन्—"तिनी त हाम्रा मन्त्रीजीका भान्जा भए, छाडिदिउँ। शिववहादुरकै कुरा गरौं न। स्थानीय विकाश विभागमा खरदार छँदा कुन गति थियो। फेरि जिल्ला कार्यालयमा अस्थायी ना० सु० मा काम गर्दा पनि त्यत्ति केही देखिएको थिएन। जव यहाँ आएर भन्सारमा छः मैन्हा वसेको थियो, हेर्नुहोस् उसको विल्डिंग! अव उसले किन जागीर खानुपऱ्यो। घरको वहाल मात्रले तपाईं जस्तो सात हाकिम खाने भयो। हुन त मसान कुरेपछि मुर्दा पक्कै फेलापर्छ। हेर्दै जाउँ। हामी लाटाका खुट्टा पनि त वाटोमा पर्ला नि।"

कृष्णगोपाल र जीवनको वीचको कुरामा मैले प्रतिक्रिया जनाइन किन-भने यस्ता कुराकानी उनीहरूको दैनिक तालिकाभित्र पर्छ।

कृष्णवहादुर आफ्नू ड्यूटीमा सतर्क छन्। हाकिम साहेवलाई चिया ल्याउन सोधेकोमा सकारात्मक संकेत पाउँछन्। तुरुन्तै तीन कप गरम-गरम चीया टेवुलमा आइपुग्छ। चिया पिउँदै कृष्णगोपाल भन्छन्—"जीवन-जी! म आज चाँडै जान्छु। अलि सस्तो डेरा वानेश्वरतर्फ छ अरे। हेर्न जानु छ। कसैले सोधे—अफिसकै कामले गएको छ—भनी दिनु होला। ए! यो फाइल सचिवज्यूको कोठामा लगिदिनुस्।"

कृष्णगोपाल कोठावाट वाहिर निस्कन्छन्। कोठामा जीवन र ममात्र छु। जीवन आफ्नू वारेमा मसँग केही भन्न लागेको जस्तो अनुहारमा फाइल पल्टाइ-पल्टाइ गरिरहेका छन्। उनले केही वोल्न सकेका हुँदैनन्। मैले वीचैमा छेडिदिएँ—"जीवन! घरमा वच्चाहरू र माउज्यूलाई सन्चै छ?"

"ठीकै छ। वच्चाहरू कहिले स्वस्थ कहिले अस्वस्थ, यस्तै छ।"

"वच्चाहरू स्कूलमा राख्ने वेला भयो होइन?"—मैले सुस्तसँग कुरा उक्काएँ।

"वेला त भइसक्यो। तर.... !" समालिंदै उनले भने—"आगेसाल राख्ने विचारमा छु।"

जीवन अझै मसँग लुकाउन खोज्छन् आफ्नू वास्तविक जीवन ! यो नेपाली समाजको यस्तै मनोवृत्ति छ। जस्तै दुःख परे पनि नआत्तिने। 'इज्जत'को त्रास। कसैले आफ्नू वास्तविकता थाहा नपावोस् भन्ने धारणा। यो कहिलेसम्म टिक्न सक्छ ?

जीवन मेरो बारेमा धेरै-धेरै प्रश्नहरू अगाडि ल्याउँछन्। म आफ्नै किसिमबाट उत्तर दिँदै जान्छु। जीवन मेरो बयानमा संतुष्ट हुँदैनन्। विशेष कारणवश म जीवनलाई भेट्न आएको होइन। मेरो उत्सुकताले तानेर ल्याएको कुरा म भन्न सक्दिन। तैपनि साथी-भाइको विषयमा कुरा शुरू भएपछि उनी शंकारहित भए। उनलाई सचिवज्यूकहाँ फाइल लिएर जानुछ। त्यसैले छोटकरीमा कुरासम्म टुँगाई मलाई केही बेर त्यहीं बस्न भनी जीवन निस्के।

कोठामा म एक्लैछु। मेरो नजर कृष्णबहादुरको खोजीमा छ। केही बेरपछि कृष्णबहादुर कोठामा पस्छन्। मैले उनलाई रोक्ने विचारले कुरा निकालीहालें र भनें—"कृष्णबहादुरजी ! तपाईं चिया बडो राम्रो बनाउनु हुँदो रहेछ।"

"के राम्रो हुन्थ्यो र" -मेरो नगीचै आई लजाए जस्तो गरी भने— "होटेलको जस्तो बनाउन कहाँ जान्नु ? हाकिम साहेब चिया नै नराम्रो भयो भनेर गाली गरिरहनु हुन्छ।"

"त्यो भन्नु त हाकिमहरूका बानी हो"—मैले भने "साँच्चै राम्रो छ।"

कृष्णबहादुरको अनुहारमा खुशी छायो। उनी मसँग केही भन्न र सोध्न खोजे जस्तो गरी यता-उता हेर्न लागे। मैले नगीचैको मेचमा बस्ने आग्रह गरें। मेच अली पर सारी मेचको एक छेउमा टुसुक्क बसेर भन—"हजुर आज दिनभरि बस्नुभयो। फेरि ठूला-साना सबै हाकिमलाई चिन्नुभएको रहेछ। विहान त सुब्बा साहेबलाई मात्र खोज्नुहुन्थ्यो।"

मैले आफ्नू टाउको मात्र हल्लाई उनलाई सकारात्मक जवाफ दिएँ र भनें —"कृष्णबहादुरजी ! तपाईंले पच्चीस वर्षसम्म यही कोठामा मात्र काम गर्नु भयो ?"

मेरो प्रश्नले उनलाई हाँसो फुटायो । केही सम्हालिएर उनले भने—"के हुन्थ्यो यही कोठामा मात्रै ! यो कोठामा त तीन वर्ष भयो । यही पिउन भएर मैले धेरै अड्डामा काम गरेकोछु । कतिवटा मंत्रीको कोठामा पनि बसें । चार मन्त्रालयको काम गरिसकें, अहिलेसम्म । अब कति गर्नुपर्ने हो ?"

"तपाईंको तलब कति छ नि ?"

"शुरू-शुरूमा अस्थाई-अस्थाई जागीर खाइयो, पछि स्थाई भएपछि जम्मा भएको ग्रेड समेतले गर्दा अझै दुइसय पुगेको छैन । चार वर्षपछि दुइसय पुग्ला ।"

"घर कहाँ नि ?"

"दहचोक, यहाँबाट कस्सिएर हिंड्दा तपाईंहरूलाई तीन घण्टा, हामीलाई दुइ घण्टा लाग्छ ।"

"अहो ! त्यत्ति टाढादेखि दैनिक आउनुहुन्छ ।"

"न आए के गर्नु हामी हाकिम होइन ।"

"किन, हाकिम भए आउनु पर्दैन र ?"

"आए पनि उनको खुश, न आए पनि उनको खुश । घरसम्म मोटर लिन जाँदा त एघार नबजी कुनै आइपुग्दैनन् । फेरि हाजिर बजाए-पछि पुगिहाल्यो । साना कर्मचारीलाई छड्के लाग्छ, उनलाई लाग्दैन ।"

कृष्णबहादुरका रमाइला कुरामा म आफैं हराउँदै जान्छु । पच्चीस वर्षसम्म विभिन्न सरकारी कार्यालय र हाकिम छामेका कृष्णबहादुर निश्चय पनि भुक्तभोगी भइसकेको मलाई अनुभव हुन्छ । उनको भनाइमा स्पष्टता छ । धेरै बुझिसकेको कारणले धक र डर हराएको छ उनमा । शायद उनको हाकिमको अभावमा उनले आफूलाई स्वतन्त्र महसूस गरेका हुन-सक्छन् ।

"कृष्णबहादुरजी ! तपाईंलाई तलबले खान पुग्छ ?"—म मुख्य प्रश्न फुकाउंछु ।

मतर्फ फरक्क फर्केर कृष्णबहादुर नमीठो हाँसोमा भन्छन् —"तपाईंले

बुझ पचाएर सोच्नु भएको यस्तो कुरा ? कृष्णबहादुरको अर्थ म एउटा सिङ्गो शरीरमात्र त होइन ? मसँग सम्बन्धित मेरा जहान छोरा-छोरी पनि त छन् । बरू यसरी सोच्नु होस्—तपाईंको तलबले घरको नून-तेल सम्म त चल्छ ?"

कृष्णबहादुरको तीक्ष्ण दिमाग देखेर म केही छिन रनभुल्लमा परें । मेरो एक प्रश्नको अनेक उत्तर पाउँदा तुरुन्त मैले प्रश्न गर्ने हिम्मत गर्न सकिन । मैले आश्चर्य अनुहारमा उनलाई हेर्दै गएँ । फेरि कुराकानीको विषय वस्तु बदल्दै मैले भनें—"यति लामो अवधिसम्म जागीर खानु भएको तपाईंले नेपालका ठूला-ठूला मानिस् पनि त चिन्नु भएको होला ?"

"किन नचिन्नु ! मन्त्री, सचिव, डाइरेक्टर, हाकिम कत्ति हो कत्तिको चाकरी गरियो । किन नचिन्नु । बेस्सरी चिनिन्छ ।"—एकछिन मौन रही कृष्णबहादुर भन्दै जान्छन्—"हामी गरीबको लागि कोही चिनेर पनि काम छैन । आफ्नू दुःख आफूसँग छ । धेरै हाकिमहरूको गुह्य हामीलाई थाहा छ । त्यही फुस्काउला भनेर आफिस छोडेपछि पनि भेट भएपछि—कृष्णबहादुर अझै जागीरमै छौ ? कहाँ छौ ? लौ चिया खाउ—भनेर एउटा रुपियाँ फालिदिन्छन् ।"

उनी फेरि भन्दै जान्छन्—"यो हातले कति हाकिमहरूको स्वागत गरियो, गरियो । अड्डाको चालामाला बुझ्न शुरू-शुरूमा 'कृष्णबहादुर' सिवाय हाकिमको मुखमा अरू केही हुँदैन । जब बुझेर अलि सप्रन थाल्छन्, घण्टी लगाउन बिर्सेर 'घण्टी सुनिनस्' भनी उल्टै झपार्न थाल्छन् । पछि त मैले उनका मनको कुरा बुझेर काम गर्नु पर्दछ ।"

"के तपाईंले हाकिमहरूलाई आफिसको चाला-माला बुझाउनु पर्छ ?"—नजानिंदो स्वरमा मैले भनें ।

"सबैले कहाँ जानेर आएका हुँदा रहेछन् र। अर्को कुरा, एउटा हाकिमले गरेको व्यवहार अर्कोलाई नसुनाउँदा रहेछन् नि ! नयाँ हाकिमलाई महीनौं दिनसम्म त मैले भन्नुपर्छ । फाइल यहाँ छ । फलानाको घर यहाँ छ । फलानोले फलानोसँग यसरी भेटछन् । साबिक हाकिमसँग सम्झौ

भइरहेको व्यक्ति यी यी हुन्। यस्तै त हो नि ! नमोटाउञ्जेल मानिसको व्यवहार एउटा हुन्छ मोटाइ सकेपछि अर्कै हुन्छ ।"

भाग्यलाई दोष दिई चित्त बुझाउने कृष्णबहादुर आफ्नू काममा त्यति असन्तुष्ट देखिंदैनन्। कसैले पैसा कमाई अत्यन्त धनी भएकोमा पनि उन-लाई कुनै ईर्ष्या छैन । काम अनुसारको तलब नभएकोमा असन्तुष्टि व्यक्त गरे पनि उनीसँग पूर्तिको उपाय शून्य छ । त्यसैले उनी सन्तुष्ट नै देखि-न्छन् । यो हाम्रो नेपाली समाजको गुण भन्नु या दोष ?

कृष्णबहादुरलाई कुन कार्यालयमा कति कमाइन्छ त्यो थाहा छैन, तर कुन हाकिमले कति कमायो निश्चित रूपमा उनलाई थाहा छ । हाकिमको पुरानो घर वा डेरा उनलाई थाहा छ। साथै नयाँ घरको चोटा-कोठा पनि उनले गरिसकेका छन् । हाकिम हुन दैवीशक्तिको आवश्यकता हुन्छ भन्ने-मा उनी पूर्ण विश्वस्त छन् । त्यसैले प्रत्येक उनका हाकिमलाई ईश्वरीय शक्तिको रूपमा उनले मानिआएका छन् । उनलाई कहिलेकाहीं साधारण रोगले सताएको वेलामा हाकिमले हप्काउँदा रोग भागेको एक दुइ घटना मलाई सुनाउँछन् । पन्ध्रौं दिनसम्म एक दाना अन्न मुखमा नहाली दैनिक चार घण्टाको घोड़े दौड़ गर्दै आफिस धाई जागीर जोगाइराखेको घटना सुनाउँछन् । छोरीको बिहेमा रुपैयांको अभावमा भोग्नु परेको दुःख र छोरीको घर नभएर माइतमै राख्नुपर्ने जस्ता दुःखपूर्ण घटना बोकेका कृष्ण-बहादुर पाएमा हाकिमी पद चलाउन सक्ने व्यहोरा मलाई सुनाउँछन् ।

पिउन दर्जामा काम गरिरहेको कृष्णबहादुर आफ्नू अनुभवको आधारमा हाकिमी चलाउन सक्ने अठोट व्यक्त गर्दा म आश्चर्यमा पर्दछु । उनको साधारण हिसाब-किताब छ । "कुरा गर्ने, साधारण नेपाली लेखापढी गर्ने र सहीछाप गर्ने त हो । मुख्य काम खरदार र सुब्बाले सकिहाल्दछन् । बाँकी रह्यो सहीछाप !" यसै सिलसिलामा उनले भने—"जिम्मेवारी कसैको छँदैछैन । काम बिग्रियो भने माथिबाट भएको भनी थोपरिदिन्छन् । कहाँ माथि ? कति माथि ? माथिको टुङ्गो छैन । त्यत्ति भनेर फुर्सद पाइरहेका हाकिम मैले पनि देखेको छु । भन्नुहोस् त ! त्यसो भन्न पाए मैले हाकिमी चलाउँदिन ?"

कृष्णबहादुर आफ्नो होश समाल्दै भन्छन्—"हुनत आफूलाई यो कुरा 'आकाशको फल आँखातरी मर' भने जस्तै हो। आफ्नू त जातै पिउन। बाउ-आमाले जन्माउँदा जुनसुकै जात दिए पनि परिस्थितिले आफ्नू जात कायम गरिदिएको छ। पच्चीसौं वर्ष त कृष्णबहादुर पिउन भनेर मनाइयो भने अब कति नै बाँचिन्छ र यसलाई हेर्नाँ गर्नु। फेरि हाम्रो शास्त्रले भनेको छ—'जो आफ्नू छ त्यसलाई हेलाँ नगर्नु।"

कृष्णबहादुर को कुरा नटुङ्गिँदै जीवन आइपुग्छन्। उनी ज्यादै खुशी अनुहारमा आफ्नू टेबुलतर्फ लम्कँदै भन्छन्- "हेर न! सचिवज्यू कहाँ क्यूमा बसी पर्नुपर्ने, अबेर भइहाल्यो।"

जीवनको अनुहार हँसिलो छ। विहानको भन्दा जीवन अहिले रमाएको देखिन्छन्। विशेष कुरा नगरी जीवनमा यस्तो परिवर्तन पक्कै पनि आएको छैन। वर्षौंको सुक्खा आशामा कोपिला लागेको जस्तो छ। उनको अनुहारबाट म सहजै बुझ्न सक्छु—उनीदेखि सचिव खुशी भएछन्। मैले उनीसँग सोधें—"तिम्रो कामदेखि तिम्रो हकिम खुशी भए?"

मेरो कुरा सुनेर जीवन झस्किए। ओठलाई कमाउँदै, अचम्म हुँदै भने—"कसरी थाहा पायौ?"

मैले हाँसेर जवाफ दिएँ—"कुन ठूलो कुरा हो र? भनन बरु के भने?"

कृष्णबहादुरलाई बाहिर गएर बस्ने संकेत गर्दै जीवन लामो सास लिन्छन् र भन्दछन्—"सचिवज्यूको आजको जस्तो 'मूड' त मैले जिन्दगी भर देखेको थिइन। जानेबित्तिकै मैले फाइलको व्यहोरा अवगत गराएँ घर्रामा राख्न भन्नुभयो, राखिदिएँ। टेबुलकै छेउमा आज्ञा लिन उभिएको थिएँ। सचिवज्यूबाट आज्ञा भयो—शुरू देखिनै मन्त्रालयमा नै छौ? मैले 'हजुर' भन्न नपाउँदै - कुन कार्यालयमा जाने विचार गरेका छौ?— एक्कासी त्यस्तो कुरा सुन्दा मेरो सम्पूर्ण शरीर काम्न थाल्यो। भन्न खोजेर पनि मेरो ओंठ जोरिएन। केही भन्न नसकी दुवै हात जोर निहुरिएर बसें।

सचिवज्यूको कोठामा भएको घटना मलाई बताउँदा अहिले पनि उनका

शरीर काम्पका म देख्दैछु। उनको अनुहारमा लाली चढिसकेको छ। मानौं उनी सचिवकै कोठामा छन्। मन्दामन्दै उनको वाक्य बन्द हुन्छ। उनले केही भनेका छैनन्। तर उनको परिवर्तित अनुहारले टडकारो मलाई बताइरहेछ। उनलाई मैले विउँझाउँदै भनें —"अनि के भयो, जीवन ?"

जीवन स्वयं समालिंदै भन्छन्—"अँ! सचिवज्यूले मलाई 'लाटा' भनी सम्बोधन गर्नुभयो। मैले अझ केही बोलिन।—हेर तिमीलाई मात्र यो छान्ने मौका दिएको हुँ—भन्ने मर्जी भयो। मेरो मस्तिष्कमा ज्वार-भाटा उत्पन्न भयो। कहाँ राम्रो कहाँ नराम्रो ठम्याउँन सकिन। आफू बसेको ठाउँबाहेक सबै राम्रो देखेकोछु। जिन्दगीमा आएको पहिलो मौका राम्रै ठाउँमा भन्नु पर्‍यो। त्यो राम्रो स्थान मेरो मस्तिष्कमा चढेन। मेरो मुखमा केवल यति मात्र आएछ - सारै दुःख पाएकोछु, जहाँ आज्ञा हुन्छ। सचिवज्यूबाट आज्ञा भयो - करमा जान्छ ?…भँगो मारवाड़ीसँग चाँजो मिलाउन तिमी सक्दैनौ - मेरो मुटु काम्न थाल्यो। एउटा अगाडि आएको कार्यालयको मौका क्षणमै गुम्यो। मेरो दिमागमा आयो कतै रसुवाको माल कार्यालयमा त नखटाइयोस्। आफ्नू होश समाल्दै भनें—भन्सार जान पाए हुने थियो—मेरो मुखबाट फुटेको वाक्यले सचिवज्यूमा हाँसो फुट्यो—अघि नै किन नभनेको लाटा —भन्ने मर्जि भयो। भन्न त भनें फेरि मलाई अर्को ताप पर्‍यो। कतै उत्तरी भेगको भन्सारमा पठाए भने त यत्रो मौका गुम्या। कसरी मैले आफ्नू इच्छा बताउने भन्ने दुविधामा थिएँ। फेरि सचिवज्यूले आज्ञा भयो—छोटी भन्सार जाने कि ?—लक्ष्य त मेरो प्राप्ति भयो। जसको प्रतीक्षामा मेरो दश वर्षका दुःखका दिनहरू कटे। सुन्ने बित्तिकै मैले एउटा आनन्दको सास लिएँ। यही प्रस्तावनालाई हुन्छ भन्न लागेको मात्र थिएँ, मेरो नजरमा रामकृष्णको स्टयाण्डर घुम्न थाल्यो। उसका केटा-केटीले हँसिलो अनुहारमा स्कूल बस कुरेको सम्झें। आफ्नू इच्छा व्यक्त गर्ने दृढ निश्चय गरी एक पाइला पछाडि हटी हात जोड्दै भने—निगाह हुन्छ भने एयरपोर्ट भन्सार पाउँ। —मेरो कुरा टुङ्गिने बित्तिकै सचिवज्यूबाट आज्ञा भयो—त्यहाँ जाने त भन्छौ, चलन थाहा छ ?—यथार्थमा कुरा नबुझे पनि

सारांशमा कुरा बुझिहालें। त्यसैले मुण्टो हल्लाएर सम्मति जनाएँ। उहाँ-बाट आज्ञा भयो—भोलिनै शिवनाथलाई मैले भनेको भनी टिप्पणी ल्याउनु भन्नु—हर्षले मेरो खुट्टा टेकिएन, पछि हट्दै म बाहिर निस्किएँ।"

यति सुनाइसकेपछि उनको शरीरमा कम्पन सुस्ताउँदै गएको छ। उनी ज्यादै खुशी देखिन्छन्। उनले आफ्नू कमजोरी बताउँदैनथे होला यदि म यस बखत यहाँ नभएको भए। जीवनको बारेमा मैले यहाँ भन्दा जान्नु जरूरी सम्झीन। अब म कुनै प्रश्न गर्ने पक्षमा छैन। केवल उनको खुशीमा साथ दिंदै मैले भनें—"धेरै राम्रो भयो आज। अब केही दिनपछि त एयर-पोर्टतिर भेट हुन्छ हैन ?"

"धेरै होइन, धेरै-धेरै राम्रो भयो !"—जीवनले तुरुन्त व्यक्त गरे—"तपाईंलाई थाहा छैन मेरा दुःखका दिनहरूको सम्बन्धमा। अब भगवानः ले दियो भने केही महीनामै वास जोड्न सक्छु।"

जीवन आफूले विगतमा गरेका मूर्खतापूर्ण कुरालाई अगाडि बढाउँदै भन्छन्—"हेर न जुन फाइलमा म केही लेख्न चाहन्न थिएँ। त्यही फाइलले मेरो जीवन बदली दियो। मैले आजसम्म यही नगरेर नै दुःख पाएको रहेछु। जागीर खाएपछि सूझ-बूझलाई बिसिएर आज्ञापालन गर्नु पर्ने रहेछ।"

जीवनले आफ्नू सुखमय भविष्य सम्बन्धमा मलाई धेरै कुरा सुनाए। अर्को त्रासको कुरा पनि गरे—त्यहाँ विशेष निगरानी पनि छ रे। भए पनि सबलाई चाहिने त्यहीं त हो नि। त्यो भए पछि कसैले केही गर्न सक्दैनन् भन्नेमा पनि उनी विश्वस्त छन्।

धेरै समय भइसकेको हुँदा म जीवनसँग विदा हुन खोज्छु। उनी मलाई कुराले अलमल्याउँदै जान्छन्। अन्तमा जीवन मलाई एक कप चिया पिला-एर मात्र विदा दिन मंजूर हुन्छन्। उनको अनुरोध म काट्न सक्दिन। जीवनको आज्ञानुसार कृष्णबहादुर चिया बनाउन जान्छन्।

रातको दश बजिसक्यो। निद्रा आएको छैन। बिछ्यौनामा पूरा शरीर फ्यौंकेर सुतेको छु। मेरो आँखाको वरपर जीवनको घरको घटनादेखि

  

कार्यालयको स्थिति र पछि सचिवको आश्वासनपछि जीवनमा आएको परिवर्तन एक-एक गरी आउँदै जान्छन् । शिवनाथ र कृष्णगोपाल जस्तो जिम्मेदार व्यक्तिको चित्तवृत्ति सम्बन्धमा सोच्दा म आफैं डराउँछु । मेरो शरीर आरामरहित छ । घण्टौंसम्म कृष्णबहादुरको सम्बन्धमा सोचाइ-पछि फेरि जीवन घुम्न थाल्छन् मेरो मस्तिष्क भित्र । मेरो मनस्थिति असन्तुलित हुँदै जान्छ ।



# सोमवार

यो देश जस्तै मेरो घर पनि प्रत्येक दिन अभावले सताइएको छ। प्रत्येक दिन श्रीमतीको गनगन सुन्न पर्छ मैले। कहिले नून छैन, कहिले तेल छैन, कहिले दाउरा छैन त कहिले चामलै छैन। महीनाको किनमेल पूरा रूपले गर्न चाहेर पनि हुँदैन। बजारमा सबै दिन सबै थोक पाइँदैन। प्रत्येक दिन मूल्य परिवर्तनको सरकारीघोषणाले आफ्नू बजेट असन्तुलित भइदिन्छ। कुनै चीज नम ल्याए पनि टार्न पुऱ्याउन पर्नेमा अभाव घोषणा हुन्छ मेरो घरमा। सरकारी स्तरमा घोषणा नभइञ्जेल मेरी श्रीमती बजारमा अभाव छ भन्नेमा विश्वस्त हुन्नन्। म घर हेर्दिन, घरको आवश्यकतालाई ध्यान दिन्न भन्ने मात्र उनको भनाइ हुन्छ मप्रति।

आज सबेरै मैले सुनें 'चीनी छैन।' मैले मनमनै विचार गरें 'जो सुन्नु पर्‍यो सुनें।' अस्ति मात्र डिल्लीबजारमा एक घण्टा क्यूमा बसी ल्याएको आधा के. जी. चीनी आज सिद्धिएको सुन्दा कुनै आश्चर्य पनि लागेको छैन। अर्कोतर्फ पूरा देशमा छैन भनिएको वस्तु मेरो घरमा पनि छैन। केको अचम्म ? यो दुइ हप्तामा चीनीको मूल्य दुइ पटक वृद्धि भइसकेको छ। पहिलो पटकको वृद्धि दश प्रतिशत भयो भने दोस्रो पटकको मा पैंतालीस प्रतिशत वृद्धि भइसकेको छ। मेरो सानो बुद्धिले भन्छ—यत्रो मूल्य वृद्धि भइ सक्दा पनि यो कसरी अभाव हुन सक्छ ?

अभावको कारणले मूल्य वृद्धि गरिएको कुरा सरकारी घोषणा-पत्रमा उल्लेख छैन। बरू सर्वतिर चीनी उपलब्ध गराइएको समाचार झुण्ड्याइएको छ। अनि घरमा बस्ने मेरी श्रीमतीले कसरी विश्वास गर्न् कि चीनी पाइँदैन भनेर उनलाई यो थाहा छैन। यहाँ वास्तविक एउटा र समाचार अर्कै हुन्छ। म उनीसंग बहस गर्न सक्दिन र सम्झाउन पनि किनकि उनीसँग

प्रमाण छ मसँग छैन। त्यसैले मैले अभावको शृंखला तोड़ी अभाव पूर्ति गर्नु छ।

बानेश्वरको प्रत्येक पसलमा पसिसकें। पसलेहरूको नकारात्मक मुण्टो हल्लाइमा मेरो पाउ अगाडि बढ्दै छ। घट्टेकुलोको शुरूको पसलदेखि पस्दै हिंडनलागें। कोही मलाई देखी हाँस्छन्। कोही झर्केर 'छैन' भन्छन्। कसैलाई मेरो सोधाइको उत्तरमा मुण्टो हल्लाउनेसम्म चाख देखिंदैन। घरको लागि चीनी उपलब्ध गराउने जिम्मा बोकेर हिंडेको म कुनै पसल-लाई नसोधि छोड्न सक्दिन। म सोध्दै जान्छु। एकाएक मेरो आँखामा पर्न जान्छ, ठूला-ठूला अक्षरले लेखिएको रातो बोर्ड 'यहाँ साल्ट ट्रेडिंग लिमिटेड-बाट उपलब्ध चीनी र नून बिक्री हुन्छ, चीनी मूल्य रु···के.जी. नून मूल्य रु···के.जी.। मूल्य लेखिनु पर्ने स्थानमा सेतो कागज टाँसिएको छ। खुशी-को लामो सास फेर्दै टक्क उभिएँ र गोजीमा रुपियाँ छाम्दै सोचें—नून पनि लगिरहनु वेश हो। आफ्नू हातको झोला अगाडि बढाउँदै दुइ के.जी. चीनी र चार के.जी. नून राखी दिन दुकानदारलाई अनुरोध गरें।

दुकानदारले मलाई तलदेखि माथिसम्म हेरी झर्कंदै भने —"तपाईंलाई थाहा छैन, चीनी छैन भनेको ?"

एक छिन त मैले उनको कुरा वुझिन। समझमा आएपछि मैले भनें— "तपाईंको दुकानमा म भरखरै आउँदै छु। कसरी थाहा पाउने तपाई कहाँ छैन भनेर ?"

"छैन भनेर थाहा पाउँदा पनि मानिसहरू सोधिरहेछन्! सोधिर-हेछन्!!"—दुकानदार झझट अनुभव गर्दै भन्छन्—"अरु थोक मात्र वेच्नु नपर्ने हो भने दोकान बन्द गर्थें।"

दुकानदारको गनगनमा मलाई विश्वास हुँदैन। नगीचै रहेको सानो स्टूलमा बस्दै मैले भनें—"त्यो माथि झुण्ड्याइएको बोर्डमा छैन भनेको छैन। मलाई के थाहा ? मैले त बोर्ड हेरें। तपाईंको दुकानभित्र पसें।"

दुकानदार कुनै उत्तर दिन इच्छुक देखिंदैनन्। हुनसक्छ विहानै देखि म जस्ता कति ग्राहकलाई भन्दा-भन्दा थाकेर मलाई पनि भनिसकेको

अनुमान गरे । म पनि त कैयौं पसलबाट गुज्रिदै यहाँ आइपुगें । म उनलाई कसरी सम्झाऊँ । केही समयको मौनतापछि सौम्य तरीकाले दुकानदारले भने—"आजमात्र चीनी नभएको हो र ? कैयौं दिन भइसक्यो । तपाईंहरू बुझ्नु हुन्न । बोर्डको कुरा गर्नुहुन्छ तपाईं ? यो हाम्रो रहरले झुण्ड्याएको होइन । यो त सल्ट-ट्रेडिंगले आफ्नू काम देखाउन ठाउँ-ठाउँमा मेरा जस्ता धेरै पसलहरूमा झुण्ड्याइदिएको छ । हामी उसका डिलर होइनौं भनेका छैनौं, पक्कै हौं । त्यही अनुसार हामीलाई बिक्रीको लागि चीनी उपलब्ध गराइदिनु पर्दैन ? भन्नुहोस् त ! के भन्नु ? उनीहरू कोठाभित्र घुमाउने मेचमा छन् । हामीले भने ग्राहकहरूसँग रातो-पीरो हुनुपर्छ ।"

"साँच्चै नै चीनी छैन ?" म विश्वस्त हुन चाहन्छु ।

"छैन, भए आफूलाई फाइदा नै हुने हो । नभएको के लाग्छ ।"

"यो के कारणले अभाव भएको हो ?"

"खै, कारण त हामीलाई पनि के थाहा हुन्छ र । अहिले मूल्य बढेपछि पाउनु पर्ने हो । अस्ति आफिसमा जाँदा पाइन्छ, रुपियाँ बुझाई जानुहोस् भनी भने अनुसार बीस बोराको रुपियाँ दाखिल गरेर आएं । रोज साल्ट ट्रेडिंगको चक्कर एक जनाले लगाउँदा पनि पाइएको छैन । आजदेखि एक-एक बोरा डिलरहरूलाई खालि नहुने किसिमबाट दिने भन्ने पनि सुनेकोछु । त्यही एक बोरामात्र पाए पनि एक पाउ, दुइ पाउ गरी आएका मानिसलाई दिन पाइयो भने बेसै हुन्थ्यो ।"

मैले तुरुन्तै भनें—"साहुजी ! त्यसो भए भरे यहाँ आउँदा आधा के. जी. पाउँछु त मैले ?"

उनले नरमाइलो हाँसो हाँस्तै भने—"के विश्वास यस्ता कर्मचारी कुराको ! तपाईं भन्नुहोस्, आज दश दिनदेखि रुपियाँ जम्मा गर्न लगाएर त आजसम्म दिएका छैनन् । अब यो एक बोरा दिने भन्नेमा कसरी विश्वास गर्नु । म त यी निगमका कर्मचारीहरू देखि वाक्क भइसकेको छु । यिनीहरू व्यापारी भए पो व्यापार गर्न जान्दछन् । कागज-पत्र लेखा-पढी गर्न जान्दैमा व्यापारी हुनेभए सबै पढेकाले व्यापार गर्नेथिए । धन

कमाउँथे, टाटा र बिरला हुन्थे। यो नेपालमा त कसले के गर्न सक्छ कसले के गर्न सक्दैन भन्ने कुरानै छान-बीन छैन। जसले जे गरे पनि हुन्छ। विचार गर्नुहोस्! मेरो मनाइको अर्थ हो जुन व्यापार निगमहरूलाई जिम्मा दिइएको छ के त्यो सफल छ?"

दुकानदारले व्यक्त गरेको यो विचार प्रति म आकृष्ट भएँ। मेरो अनुहारले उनलाई कुरा अगाडि बढाउन प्रेरणा दिइरहेको छ। उनी भन्दै जान्छन्– "यो चीनीको अभावको कारण 'डिजेल' अरे! भन्नुहोस्, 'डिजेल' पनि त यही हप्तामा नै त भाउ बढेको हो। यी निगमहरूले जनतालाई झुक्याएर हुने कुरा हो र? विश्वासै गर्न नसकिने तर्क दिन्छन्। डिजेलको अभावको कारणले त्रिभुवन राजपथ रोकियो, भनेको भए विश्वास गर्ने कुरा हो। त्यो पनि त रोकिएको छैन। त्यसमाथि पनि अर्को एक संस्थानको रोपवे पनि त चल्छ। सारांशमा कुरो यही हो कि व्यापारीले व्यापार गरेको भए पो इज्जत बचाउन जस्तोसुकै स्थितिको पनि सामना गरी सामान उपलब्ध गराउँथ्यो। यो त पर्‍यो कर्मचारीको हातमा। यस्तो अभाव हुँदा झन् उनको मूल्य बढ्छ। सा-साना व्यापारी चाकरीमा आउँछन्। ठूला व्यापारीले होटेलमा निम्ता गर्छन्। स्वास्नी, छोरा-छोरी र नातेदार सम्मलाई भन-सुन शुरु हुन्छ। अनि? यस्तो अभाव नभए पनि गराउँछन्।"

उनी भन्दाभन्दै एक्कासी रोकिन्छन्। हातले कोट्याउँदै मलाई सजग गराउँछन्। सड्कको पारीपट्टी फूटपाथमा हिँडिरहेको एक अधवैंसे मानिसलाई आँल्याउँदै उनी हतारिँदै भन्दछन्—"त्यो मानिस चिन्नु हुन्छ?"

दुकानदारको कुरामा केन्द्रित मेरो मस्तिष्कले फूटपाथतर्फ झट्ट दृष्टि दिन सक्दैन। म अलमलिएर फेरि सोद्धछु—"को को?"

"उ त्यो क्या मोटो-मोटो!"

"ए! अहँ म चिन्दिन।"

"त्यस्तो मान्छेलाई तपाइँ नचिन्ने?"

"त्यो मान्छेलाई मैले कहिले देखेको छैन।"

"तपाईंको घर कहाँ पर्‍यो?"

उभिएर बसेको रहेछु। मन्त्रीले मसँग बोल्लान्—के छ ? भने र सोध्लान् भन्ने आशा बोकी, वरपर उभिएर बसेकाहरूको अगाडि इज्जत नै आउने भयो भन्ने सम्झी झन् गजक्क फुली बसेको थिएँ। उनले त मसँग बोल्दै नबोली देखेको नदेखै गरी सरासर भवनभित्र प्रवेश गरे। मैले सोचें—देखेनन् होलान्, कार्यालय मै गएर भेट्छु भनी पछि-पछि गएँ। म उनको नगीचै पुग्न आटेको थिएँ, उनी कार्यालयको ढोकाभित्र पस्छन्, ढोका बन्द हुन्छ। मन्त्रीलाई भेट्न म लाइनमा बस्छु। भेट्न आउने मान्छेको बुइँचो छ। एकपछि आर्कोको भेट्ने पालो आइरहेको छ। घण्टौं कुरिसकें, आफ्नो पालो आउँदैन। चिने-जानेको व्यक्ति हुँदा मलाई स्वागतै गर्लान् भन्ने सम्झी पालै नआए पनि जबरदस्ती कोठाभित्र प्रवेश गरेछु। मन्त्रीजी लचकदार घुमाउने मेचमा लेटेर बसेका रहेछन्। मैले उनलाई नमस्कारको साथ अभिवादन गरें। उनले नमस्कारसम्म फर्काएनन्। मैले धेरै किसिम-बाट सम्झाउँदा पनि उनले मलाई चिन्न इनकार गरिदिए। त्यतिकैमा तिमीले आई बिउँझाइदियौ।"

मैले सुनाएको हिजोको घटना र रातीको सपना एक-एक सुनेपछि एक क्षणको मौनतापछि भाइले भने—"तपाईंले सत्य सपना देख्नुभयो। वास्तविकतामा पनि तपाईं यही पाउनु हुन्थ्यो जो सपनामा पाउनु भयो।"

"अँ, मलाई पनि त्यस्तै लाग्यो। हुन त उनको हिजोको कुरा अनुसार हाम्रो गहीरो मित्रता कायम रहन्छ। तर म विश्वास गर्ने पक्षमा भने छैन।"

भाइले भने—"त्यस्ता अनैतिकसँग मित्रता गरेर पनि के फाइदा ?"

मैले उनलाई सम्झाउँदै भनें—'नैतिक र अनैतिकको कुरा होइन। तिमीले अनैतिक सम्झेको कुरा उनले नैतिक सम्झेको पनि हुन सक्छ। जे होस्, हामीलाई उनको व्यक्तिगत आदतसँग कुनै मतलब छैन। उनले कति काम गर्न सक्छन् भन्ने कुरासँग मात्र हामीलाई मतलब छ।"

हाम्रो कुरा नटुंगिदै ध्रुवनाथजी मकहाँ हतारिंदै आइपुगे। कोठामा प्रवेश गर्दै उनले भने—"अहो ! अहिलेसम्म बिछौनामै ? मन्त्रीजी कहाँ

जान अबेर भएन ?"

मैले हाँस्तै उत्तर दिएँ—"हिजोको घटना माइलाई सुनाइरहेको ।"

उनले मलाई सम्झाउदै भने—"हिजोको कुरा याद छ ? उनी हामी नपुगी चिया पनि पिउँदिन भनेका छन् ।"

मलाई हिजोको मन्त्रीजीको निमन्त्रणा सम्झना भयो । ध्रुवनाथजी मन्त्रीजी कहाँ जान तयार भएर आएका रहेछन् । मैले जान्न भन्न सकिन । एक छिन ध्रुवनाथजीलाई बस्न लगाई म आफ्नो बिहानको कार्यबाट फुर्सद लिन बाथरूम पसें । उनीसँग मेरो माइले हिजोकै घटना सम्बन्धमा अनेक प्रश्न गर्दै, घटना सम्बन्धमा अझ बढ़ी जानकारी हासिल गर्दै रहेछन् । म जति सक्यो चाँडो घरबाट फुर्सद लिई ध्रुवनाथजीसँग मन्त्रीजीकहाँ जान निस्किएँ ।

हामीदुवै मन्त्रीजीको क्याम्प भित्रपुग्यौं । ढोकामा पहरा गरिरहेको आएलसेशन कुकुरको डरले घरतर्फ बढ्ने हिम्मत गरेनौं । मेरो नजर क्याम्पको चारैतर्फ फिंजिन लाग्यो । मैले खुला ग्यारेजमा हिजोको गाड़ी देखें । ध्रुवनाथजीलाई गाड़ी देखाउँदै भनें—"हिजोको गाड़ी आइसकेको रहेछ ।" गाड़ी विहानै आइपुगेकोमा ध्रुवनाथजीलाई कुनै आश्चर्य नलागेको कुरा उनको अनुहारले वताएको छ । उनको नजर भवनको पहिलो र दोस्रो तल्लामा केन्द्रित छ । चारैतर्फ कोही पनि देखिंदैन, केवल एउटा कुकुर बाहेक । म पनि समय-समयमा भवनको झ्यालहरूमा नजर दौड़ाउँछु ।

निकै बेरपछि एक जना त्यही घरको कामदार जस्ता देखिने दुवै हातमा झोला बोकी बाहिरबाट क्याम्पभित्र प्रवेश गर्छन् । हामी उनीतर्फ बढ्दै भन्छौं—"भाइ, यो घरको मान्छे हो ।"

"हजुर ! के भन्नुपर्‍यो ?"

"मन्त्रीजी हुनुहुन्छ ?"

"हुनुहुन्छ होला ।"

"हुनुहुन्छ भने बाहिर मान्छे भेट्न आएका छन् भनिदिनुहोस् ।"

"हवस्" भन्दै उनी भवनभित्र प्रवेश गरे । करीब पन्ध्र मिनेटपछि

फेरि त्यही व्यक्ति बाहिर निस्किए। हामी दुवै उनको छेउमा गई उत्सुकता पूर्वक सोध्यौं--"के भन्नुभयो ?"

"ए मैले त भन्नै बिर्सेछु"--भन्दै फेरि फर्किएर गए। करीव पाँच मिनेटपछि आएर भने—"मन्त्रीज्यू त बाथरूममा हुनुहुन्छ, एक छिन पर्खनुस्"—भन्दै उनी क्याम्प बाहिर गए।

मन्त्रीज्यू घरैमा हुनुहुँदो रहेछ। भेट हुने त हामीलाई पूर्ण आशा भयो, ढीलो र चाँडो मात्र। हामी कुर्दै गयौं। अझै कोही व्यक्ति देखिएका छैनन्। हामी दुइ त्यो भवनको विषयमा आफ्नू अनुमान शुरू गर्न लाग्यौं। मैले ध्रुवनाथजीलाई विस्तारै भनें—"यो भवन कहिले बनेको होला ?"

"हालसालै बनेको जस्तो देखिन्छ। हेर्नुहोस् न सबै नयाँ छन्।"

"कति स्क्वायर फीटमा बनेको तपाईं अनुमान गर्न सक्नु हुन्छ ?"

"करीव पाँच हजार स्क्वायर फीटमा बनेको होला।"

"तीन तला भएपछि यसको स्पेश पन्ध्र हजार स्क्वायर फीट भयो, होइन ?"

"हो, पन्ध्र हजार स्क्वायर फीट भयो।"

"तब पन्ध्रै जना जहान भए पनि प्रति व्यक्ति एक हजार स्क्वाएर फीट स्पेश पर्न आयो। तपाईं अनुमान गर्न सक्नुहुन्छ ध्रुवनाथजी, यो घर कति रकममा बन्यो होला ?"

"खै, भित्रको सजावट देख्न पाइएको छैन। यसो बाहिरी रूपले विचार गर्दा दशदेखि पन्ध्रलाखको सहजै अनुमान गर्न सकिन्छ।"

हाम्रो कुरा टुङ्गिएको छैन। त्यत्तिकैमा ती पहिलेकै व्यक्ति फेरि एक हातमा झोला बोकेर प्रवेश गरे। हामी नगीचै आई भने—"ए, भेट्नु भएको छैन ? म तुरुन्त खबर पुऱ्याउँछु।"—भन्दै हतारिँदै घरभित्र पसे। करीब दुइ मिनेटपछि उनै फेरि बाहिर निस्किए, हामीलाई घरतर्फ आउने इशारा गरे। उनले औंल्याइदिएको कोठामा प्रवेश गऱ्यौं। भव्य बैठकमा कोही पनि देखेनौं। ती व्यक्तिनै आई भने—"तपाईंहरू एकछिन बस्दै गर्नुहोस्। मंत्रीज्यू आउनुहुन्छ।"

एउटा लामू सोफामा हामी दुवै गई संगै बस्यौं। बैठकको ढोका बन्द भयो। हामी बैठकमा दुइजना मात्र छौं। हामीलाई यहाँ कुरा गर्न मनभित्र त्रास पैदा भयो। दुवै केही नबोली चूपचाप बैटकको सजावट मात्र हेर्न व्यस्त रह्यौं।

करीब पन्ध्र मिनेटको प्रतीक्षा पछि एकान्तलाई चिर्दै मंत्रीजी बैठकमा प्रवेश गरे। हामी दुवै उठी अभिवादन गऱ्यौं। हाम्रै छेउको सिंगल सोफामा आई उनी बसे। प्रसन्न र खुशी अनुहारमा उनले हामीलाई भने—"यहाँहरू-लाई केही बेर कुराएँ। माफ गर्नुहोस्! यहाँहरू संचै हुनुहुन्छ?"

हामी दुवैले मुखामुख गऱ्यौं। उनले हामीलाई ठ्याम्मै चिन्नसकेका छैनन्। उनको संचो-विसंचो हामीले सोध्नु पर्नेमा उनले हामीलाई सोधे। उनले कूटनैतिक तरीकाले हामीसँग राम्रै व्यवहार त गरे, तर उनले हामीलाई राम्रै गरी चिनेर होइन।

केही क्षणपछि हामी दुवैले एकैचोटि भन्न पुग्यौं—"राम्रै छ! यहाँ-लाई?"

"के हुन्थ्यो? बाँचेकै छु भन्नु पऱ्यो"—उनले भने—"के सेवा छ मेरो लायक भन्नुहोस्?"

मंत्रीजीले हामीलाई सम्झन सकेनन्, तर पनि उनको अभिनयमा कुनै कमी छैन। यही अभिनयको कारणले त उनले यत्रो सफलता हासिल गरे। ध्रुवनाथजी चिनिने पक्षमा गई भन्न लागे—"मंत्रीजीले हिजो हामीलाई चिया पिउन डाक्नु भएको थियो, होइन र?"

"हो, हो! किन होइन?"—उनको शरमले भरिएको आँखा हामीबाट अन्यत्र पार्दै भन्छन्—"त्यसैले त तपाईंहरूलाई कुरीराखेको!"

उनले नजीकको कलिङ्ग वेलको बटन दबाउँछन्। कामदार बैठकमा प्रवेश गर्ने बित्तिकै तीनवटा गरम कफिलाई आदेश गर्दै भन्छन्—"मलाई तपाईंहरूले हिजो खूब ठूलो मद्दत गर्नुभयो। त्यसको लागि म तपाईंहरू प्रति आभारी छु। भन्नुहोस् मेरो लायक कुनै सेवा छ भने, म तपाईंहरूलाई पनि गर्नेछु।"

मंत्रीजीबाट यति कुरा सुन्नेबित्तिकै हाम्रो हृदय प्रफुल्लित हुन्छ। तत्काल हामीले उनीब.ट पाउने आशा त गरेका छैनौं, तर पनि हामीले भन्यौं—"त्यस्तो कुनै दुःख दिन पर्ने खण्ड आयो भने हामी आइहाल्छौं। हजुरलाई नभने हामीले कसलाई भन्ने?"

"तपाईंहरूले अपठचारो नमानी भने हुन्छ।"—उनले भने—"मैले जो सक्छु गरिदिन्छु।"

यही मौकामा मैले आज देखेको सपना सम्बन्धमा कुरा सुनाएँ। मंत्रीजी-ले चिन्न इनकार गर्नुभएको पनि भने। मेरो कुरा सुन्ने बित्तिकै उनी खुला दिल गरेर हाँस्न लागे। हाँस्दा हाँस्दै उनले भने—"म त्यस्तो रहेछु त? भन्नुहोस्! तपाईंको सपना गलत हो।"

उनको प्रामाणिक कुरालाई मैले मान्न करै लाग्यो। यसै संदर्भमा मैले सोधें—"हजुर कहिले मंत्री हुने त?"

"यही समय भनेर त कसरी भन्नु, तर हुन्छु जरूर। हेर्नुहोस् न आज-कालका मंत्रीहरू कस्ता-कस्ता अनुहारका छन्। यिनले कतिदिन चलाउन सक्ने हुन् र? हामी नै आउनै पर्छ। यसमा म निश्चिन्त छु।"

आफ्नो कुरामा जोड़ दिँदै उनले भने—"अब हेर्नुहोस् न! म जस्ताले चलाएको ठाउँमा अहिले एउटा पुरानो लकड़ीकै व्यवसायी ल्याएर राखिएको छ। अब भन्नुहोस्, उसले आफूले पाएको स्वाद बिर्सन सक्ला? पोहरसम्म पनि काठमाण्डूका उड-वर्कसका मालिकहरू सुनचाँप खोज्न उनको घरमा घुइरो लागेको मेरै आँखाले देखेको छु। मैले सुनेको थिएँ, एकपटक त उनले जिल्ला भरिको सुनचाँपलाई आफ्नै घरवारीको भनी स्वीकृतिलिई जिल्ला निकासी गरेका थिए। यो कुरा हो कि होइन भनी जिल्ला-टूरमा जाँदा बुझेको थिएँ। वास्तविकता त्यही रहेछ जो मैले सुनेको थिएँ। कति कुरा कागजी प्रमाण नभएर पनि प्रत्येक व्यक्ति व्यक्तिको हृदयमा छापा परि-सकेको हुन्छ, जसलाई थुन्न र छेक्न सकिन्न। अब भन्नुहोस्! यस्ता व्यवसायीले अधिकार पाएपछि बाँकी राख्छन् नेपालको जङ्गल?"

हामीले बुझ्न नसक्ने कुरा उनी बयान गर्दैछन। हामी यी कुराहरूमा

अनभिज्ञ छौं जो उनी सुनाउँदै छन्। तरपनि हाम्रो विषयवस्तु बदल्न सक्दैनौं। हामी उनका बयान सुनिरहन्छौं। उनी भन्दै जान्छन्—"मेरो पालामा त चाँजो-पाँजो सबै मिलाएर, नियम नीति भन्दा बाहिर नगई बड़ो विचार पुऱ्याएर जङ्गल बचाएको थिएँ। अहिले हेर्नुहोस्! प्लटका प्लट विदेशिंदैछन्। कुनै चट्टा नेपालको गाउँ शहरमा पसेको छैन। यही क्रमले यिनीहरूले गर्दैजाने हो भने केही वर्षमै नेपालले दैवीप्रकोपको मुकाबिला गर्नुपर्छ।"

उनी भन्दै जान्छन्—"हिजो एउटा मान्छेले आएर मलाई भन्यो—हजुर! हजुरले हालको मन्त्रीज्यूलाई आज्ञा भइदिनु पऱ्यो। धमाधम जर्ना निकासीको आदेश दिंदैछन्। मलाई धेरै चाहिने होइन दुइसय ट्रक जर्ना निकासीको आदेश भए पुग्छ। आदेश लिएर गलगलिया स्टेशन पुग्ने बित्तिकै प्रति ट्रक पाँचसय भा० रु० पाइन्छ। आफूले एक पैसा नलगाई एक लाख भा० रु० को बचत हुन्छ। हजूरले भनिदिनु पऱ्यो। मैले भनें—हेर्नुहोस्, मेरो हातमा केही छैन। मैले भनेको मान्दैनन्। हाल म यो कामको लागि उपाय रहित छु भनी मैले फर्काएँ। यसबाट यो बुझ्न सकिन्छ कि त्यहाँ मनपर्दो गरिरहेको छ।"

उनी एक छिन मौन रही फेरि जोशिंदै भन्छन्—"यो कति दिन टिक्ने हो र यो? हामीलाई यिनले ल्याउनै पर्छ!"

मन्त्रीज्यूकै कुराको सिलसिलामा मैले विस्तारै भनें—"यसरी मनपर्दो गरेकोमा कुनै कहीं कार्यवाही गर्ने अड्डा छैन र?"

"त्यो त किन छैन? छ नि।"

"भए त हेर्नु पर्ने होइन र?"

"हेरेकै त छ नि। आँखा चिम्लेको छैन।"

बडो नाटकीय ढंगले उनले यो वाक्य प्रयोग गरे। हामी सबै हाँस्यौं। यत्तिकैमा कफि आइपुग्छ। मंत्रीजीको घरको गरमागरम कफिको स्वाद हामीले नौलो पायौं। विषयवस्तु बदलिएर कफितिर केन्द्रित हुन्छ। यो कफि उनले लण्डनबाट मगाएका रहेछन्। उनको धेरै बानीहरू विदेशी

वस्तुहरूमा भएको हामीले सहजै अनुमान गर्‍यौं।

मंत्रीजीले माग्नु भए अनुसार हामी दुवैले पूर्ण परिचय दियौं। आफूले गरिरहेको काम र आफ्नो परिवारको बारेमा पनि जानकारी दियौं। अब हामीलाई मंत्रीज्यूको बारेमा जानकारी पाउन बाटो खुल्यो। मैले सोधें—"मंत्रीज्यूको जहान बच्चा कति छन् कुन्नि?"

"यसो त जहान बच्चा आठ जना छौं। यहाँ केवल नोकरहरू बाहेक चारजना छौं।"

"अरु कहाँ छन् त?"

"गाउँमा दुइजना छन्। दुइजना बाहिर पढ्न गएका छन्।"

"अनि के गाउँमा दुइजना बच्चा मात्रै कि....?"

"होइन, मेरी जहान छिन्।"

"ए! त्यसो भए यहाँ मंत्राणीज्यू बस्नु हुन्न?"

"गाउँमा एकजना यहाँ दुइजना बस्छन्। अहिले मेरो तीन जना जहान छन्।"

आश्चर्यपूर्वक मलाई 'ए!' भन्न आयो। उनी साधारण किसिमबाट जवाफ दिंदैछन्। फेरि मैले सोधें—"दुइजना बाहिर पढन गएका बच्चाहरू?"

"हो, एउटा छोरा एउटी छोरी। ठूली छोरी लण्डनमा पढ्छिन्, ठूलो छोरा दार्जिलिङ्गमा पढ्छ"—भन्दै उनी गम्भीर मुद्रामा भन्छन्—"आर्थ साल छोरो पनि लण्डन पठाउँदै छु।"

मन्त्रीजी र हाम्रो बीचमा भएको कुरा-कानीदेखि हामी पूर्ण सन्तुष्ट छौं। उनी धेरै कुरामा स्पष्ट देखिन्छन्। उनी सँग कुरा-कानी गर्दा हामीले उनलाई हिजो मात्र चिनेजस्तो हामीलाई महसूस भएन। हामीलाई लाग्यो हामी वर्षौं पुराना साथी हौं।

उनी आफ्नू पुराना कुरा निकाल्दै भन्छन्—"मेरो पालामा मैले काम गर्दा कुनै नराम्रो काम गरिनँ। देश र जनताको लागि नै मैले मरि-मेटि काम गरें। फेरि म जनताको बीचबाट आएको एउटा जनप्रतिनिधि पनि

त हुँ । जनताको एउटा सेवक पनि त हुँ । जसले जनताको सदैव हित चिताउनु पर्छ । त्यही अनुरूप मैले काम गरें । हेर्नुहोस् ! मेरो पालामा एउटासम्म पनि नराम्रो काम गर्‍यो भनेर उजुरसम्म परेन । भन्नुहोस् ! यो भाग्यको कुरा होइन ? मैले आफूले काम गर्दा तलदेखि माथिसम्म अनुपात मिलाएर काम गर्दथें । नीति नियममा बाधा नपर्ने गरी काम टुंग्याउँथें । अलि-अलि बाधा नै पर्ने स्थिति भए पनि छेउ पुच्छर बचाएर कामलाई समाप्त गर्दथें । लौ, भन्नुहोस् ! कसैले भन्न सक्छ मैले कुनै वदमाशी गरेको छु भनेर ? कसैले भन्न सक्दैन ! यो मलाई पूरा विश्वास छ । त्यसैले त मलाई यो पनि विश्वास छ यो देशमा मेरै फेरि आवश्यकता पर्दछ ।"

उनको कुरा नटुंगिदै फेरि कफि आइपुग्छ । हामी सबै कफि पिउन व्यस्त हुन्छौं । उनको कुरा अझै टुंगिएको हुँदैन । धेरै समय बितिसकेको र कफि पिएपछि बिदा दिने उनले निश्चय गरेको हुँदा उनी मौन रहन्छन् । कफिको समाप्तिको साथ-साथ हामी बिदा माग्छौं । उनले स्वीकृति दिंदै भन्छन्—"आउँदै गर्नुहोस् ! अर्को नसम्झनुहोस् !"

सोफाबाट उठ्दै ध्रुवनाथजीले भने—"फेरि-फेरि आई हजुरसंग बात गरौंला । हजुरसंग बिहान त सबै दिन भेट हुन्छ होला ?"

"अँ, सबै दिन । कुनै पनि समय आउनुहोस् स्वागत छ !"

उनको वेसारे बोलीले मलाई केही क्षण प्रभावित पार्‍यो नै तर त्यसमा लुकेको कृत्रिमताको झल्कोले मलाई श्वास्स घोच्यो । यत्तिकैमा हामी दुवै नमस्कार गर्दै निस्क्यौं ।



# बिहीवार

विहानको खाना खानु अघि नै पुलचोकसम्म गई मोटर दखाएर आउँ भन्ने विचार हुँदाहुँदै पनि म खाना नखाई घरवाट निस्कन पाउन्न । 'सबैं-भरि चीसो भात कति खान मन लागेको ?' भन्ने घरको कचकंच सुन्न मन लागेन । त्यसैले जतिसुकै अबेर भए पनि खाना खाएर निस्कने निश्चय गरें। एकै दिनको गोरखापत्रको विज्ञापनले मेरो मोटर विक्ने स्थितिमा पुगेको हुँदा म मनमनै प्रसन्न छु। मलाई कहिले गएर मोटर देखाउँ जस्तो भइ-रहेछ। घरका सबै जहानलाई पानी बोक्न लगाई मोटर साबुन-पानीले घोएर चिल्लो बनाइसकेको छु। केवल मलाई 'दोर्जे सदन' पुग्न वेर छ। टेलिफोनवाट मलाई भने अनुसार 'दोर्जे सदन' पुलचोक दोवाटोकै ओल्टे-कोल्टे हुनुपर्छ ।

म मनमनै विचार गर्न लागें—'दोर्जे सदन' मलाई बोलाइएको छ, तर टेलिफोनमा नाम भने 'छिरिङ' भनिएको छ। हुनसक्छ 'छिरिङ दोर्जे उनको नाम होला र आफ्नू पछिल्लो नामवाट घरको नाम राखिएको होला। विहानै टेलिफोन गर्नुको अर्थ छिरिङ दोर्जेलाई मोटरको ज्यादै नै आवश्यक भएको हुनुपर्छ । मैले निश्चय गरें यो पटक त एक दुइ हजार घटि नै मूल्य तोके पनि मोटर छोडेर आउने छु ।

मलाई पुलचोक पुग्न ज्यादै हतारो भएको हुँदा चाँडो-चाँडो खाना खाई भान्सावाट फुर्सद लिन्छु। हतार-हतार कपड़ा लगाई पुल्चोकको लागि रवाना हुन्छ ।

बाटोभरि सोच्न लागें—मोटरको मूल्य कति बताउने ? धेरै बताउँदा कुरै नगरी पठाउने हो कि ? थोरै बताउँदा आफूलाई नोक्सान हुने । यो पटक मैले मोटरको मूल्य नबताउने निश्चय गरें। यदि उनले मोटरको मूल्य

सुन्ने धेरै नै इच्छा गरे भने यति मात्र भन्छु 'यही कम्पनीले बनाएको नयाँ मोटरको दाम तपाईंलाई थाहै छ, अब यो त दशौं वर्ष पुरानो भइसक्यो। तपाईं नै मूल्य निर्धारण गर्नुहोस्' यति भनेपछि उनलाई केही न केही मूल्य बताउन कर लाग्छ। उनले तोकेको मूल्यमा एक दुइ हजार नहेरी आँखा चिम्लिएर फालिदिन्छु।'

पुलचोक दोबाटोमा मोटर अड्याई बाटो हिँडिरहेको एउटा व्यक्तिलाई सोधें— 'दाइ ! 'दोर्जेसदन' कहाँ छ ?"

उनी हिँड्दा हिँड्दै टक्क अडिए र सोच्दै भने—दोर्जे सदन ! यहीं पुलचोकमा भनेको थियो ?"

"हो पुलचोक दोबाटोबाट अलिकति भित्र भनेको थियो।"

उनले तुरुन्त भने—"ए ! स्मगलर दोर्जे ? हो, पुलचोकम हो ! यो बाटो जानुहोस्, दाहिनेपट्टि विशाल रंगीचंगी घर देख्नुहुन्छ। त्यही हो !"

उनलाई धन्यवाद दिंदै म आफ्नू मोटरतर्फ बढें। मैले सोचेको थिएँ मात्र 'छिरिङ दोर्जे'। यहाँ एक व्यक्तिबाट सुनें 'स्मगलर दोर्जे'। दोर्जे मात्रले नचिनिने, ती मलाई विहान टेलिफोन गर्ने व्यक्तिको मेरो हृदयमा जुन रूप कोरिएको थियो, 'स्मगलर' भन्ने शब्द नामको अगाडि जोडिएको सुन्नेबित्तिकै उनी प्रतिको मेरो पहिलेको सोचाई टुक्रियो। मेरो दिमागले उनको रूपलाई कल्पना गर्न सकेन। बरू मेरो मस्तिष्कमा नाना किसिमका प्रश्नहरू आउन थाले—यी दोर्जे कस्तो होलान् ? रूप जिउ-डाल तिनको कस्तो होला ? उनको विचार कस्तो होला ? उनले मसँग कस्तो व्यवहार गर्लान् ?

यत्तिकैमा म निर्दिष्ट ठाउँमा पुग्छु। बाहिरी ढोकामै 'दोर्जे सदन' लेखिएको छ। ढोकाकै छेउमा 'पत्र मंजुषा' र 'कुकुरदेखि सावधान' लेखिए को छ। मोटरको स्टार्ट बन्द गरी हर्न लगाउन थाले। एक व्यक्ति ढोका-बाट बाहिर निस्कँदै भन्छन्—"कसलाई खोज्नुभएको ?"

"छिरिङ दोर्जेलाई।"

"छिरिङ साहेबलाई कि दोर्जे साहेबलाई ?"

उनको कुरा सुनेर म अलमलमा परें। मैले सोचेको थिएँ छिरिङ दोर्जे एकै होलान्। मलाई बिहान टेलिफोन त छिरिङले गरेका थिए। यही सोची मैले भनें—"छिरिङलाई"

"हुन्छ म छिरिङ साहेबलाई सोधेर आउँछु। बोलाउनु भयो भने भेट्नु होला"—भन्दै उनले मलाई सोधे—'तपाईं कहाँबाट आउनु भएको ?"

"बिहान टेलिफोन गरेको मानिस भनेर भनिदिनु होस्।"

"हस" भन्दै उनी ढोकाभित्र पस्छन्। म दोर्जेलाई भेट्न सक्दिन, ती व्यक्तिको भनाइ अनुसार छिरिङलाई मात्र भेट्न पाउँछु। पुलचोक दोबाटोमा भेटिएको व्यक्तिको एक शब्दको प्रयोगले मलाई दोर्जेसंग भेट गर्ने इच्छा बढिरहेछ।

बाहिरी ढोका खोलेर मलाई पहिलेका व्यक्तिले स्वागत गर्छन्। म आफ्नू मोटर भित्र क्याम्पमा प्रवेश गराउँछु। ती व्यक्तिले मलाई बाहिरी खुला बैठकमा बस्न भन्छन्। म गई बाहिरी बैठकको एक गद्दादार मेचमा बस्छु। यो बैठक तीन तर्फबाट फूल र लहराहरूले सम्पूर्ण बैठकलाई ढाकेको छ। मानुँ यो 'बैठक बगैंचा' हो।

एक युवक बैठकमा प्रवेश गर्दै भन्छन्—"यहाँलाई नै हो मैले बिहान फोन गरेको ?"

"हो ! तपाईं छिरिङ हुनुहुन्छ ?"

'हजुर !' भन्दै उनी हात मिलाउन मतर्फ बढे। र नजिकैको मेचमा बस्दै भने—"गाड़ी यही हो ?"

"हजुर यही हो।"

"यो त ज्यादै थोत्रो रहेछ !"

"थोत्रो त होइन पुरानो पक्कै हो।"

"कति मोल राख्नु भएको छ ?"

"के मोल राख्ने पुरानो मोटरको। चलाई हेर्नुहोस्। इंजिन सब बनाएको छु। टायर सबै नयाँ छन्। मोटर हेरेर आफै मोल गर्नुहोस्।"

उनले मोटरको साँचो माग्दै भन्छन्—"जाउँ न स्टर्ट गरी हेरौं।"

हामी दुवै मोटरतर्फ जान्छौं। उनी ड्राइवर सीटमा वसी स्टार्ट गर्न थाल्छन्। मेरो नजर क्याम्पको चारै तर्फ फिंजिन थाल्छ। एकाएक मेरो आँखा मोटर ग्यारेजमा पर्छ। एक से एक चम्किला र नयाँ मोडेलका चारवटा कारहरू देख्छु। ती मोटरको दाँजोमा मेरो त मोटर नै भन्न नमिल्ने किसिमको छ। मलाई लाज लाग्न थाल्यो। घरमा चार-चारवटा मोटर भएर पनि किन मोटर किन्न खोजे? यसमा मलाई आश्चर्य लाग्यो। मोटरको हेर-देख पछि छिरिङ र म फेरि बैठकमा आयौं। मेरो टाउको लाजले निहुरियो। म केही सोध्न नसक्ने स्थितिमा पुगें। आफैले मोटर हेर्नुहोस् भनेर हेर्न लगाएको छिरिङसँग 'कस्तो छ त?' भनेर सम्म सोध्न सकिन। उनले नै सोधें—"मोल कति राख्नु भएको छ?"

मैले उनको कुरा काट्दै विस्तारै भनें—"त्यो ग्यारेजको मोटर तपाईंकै होइन?"

"गाड़ी त हाम्रै हो। यी सबै दोर्जे साहेवका मनपरेका गाड़ी हुन्। प्राय उहाँमात्र चढनु हुन्छ। नयाँ गाड़ी लिन लागेको उहाँको मेनेजरको लागि हो।"

उत्सुकतासाथ मैले सोधें—"यो दोर्जे साहेव को हुनुहुन्छ? मैले त सोचे-को थिएँ, तपाईंको नाम नै 'छिरिङ दोर्जे' होला भनेर। टेलिफोनमा छिरिङ भन्नुभयो, घर 'दोर्जे सदन' भन्नु भयो।"

"दोर्जे साहेव मेरो 'वोस' हुनुहुन्छ। म उहाँको सेक्रेटरी हुँ।"

"ए, दोर्जे साहेव यहीं वस्नुहुन्छ?"

"हो, यहीं वस्नुहुन्छ, काठमाण्डू वस्दा।"

"मतलब! उहाँ अरू ठाउँमा पनि वस्नुहुन्छ?"

"उहाँको न्यूयार्क र ह्याम्वर्गमा पनि घर छ।"

"ए, यसको मतलव धेरै समय उतैतिर रहनुहुन्छ?"

"वर्षभरि नै भन्नुहोस् न। यहाँ त वर्षको आठ नौ खेप आउनु हुन्छ, हप्ता पन्ध्रदिन वस्नुहुन्छ।"

"अहिले, कहाँ हुनुहुन्छ उहाँ?"

"अहिले त यहीं हुनुहुन्छ।"

दोर्जेको बारेमा मैले जति कुरा सुनें त्यसबाट मेरो उनीसँग भेट्ने इच्छा झन् बढ्दै गइरहेछ। म कसरी भेट्ने इच्छा व्यक्त गरौं। सोझै छिरिङलाई मैले दोर्जे भेट्ने इच्छा व्यक्त गर्दैमा भेट्न पाइएला भन्नेमा म विश्वस्त छैन। तैपनि मैले छिरिङलाई विस्तारै भनें—"के दोर्जे साहेबलाई म भेट्न सक्छु ?"

उनले मेरो प्रश्न नै नबुझी जवाफ दिए—"यो एउटा गाडी खरीद गर्न मै सक्छु। उहाँले मलाई यस्तो सानो-तिनो काम गर्ने फूल पावर दिनुभएको छ। दोर्जे साहेबसँग कुरा गर्नुपर्ने आवश्यकता नै छैन।"

मैले उनको सबै कुरा बुझें, तर मेरो कुराको आशय भने उनले बुझेनन्। मैले उनलाई विचार बदल्दै आफ्नू राय व्यक्त गरें—"यो ज्यादै पुरानो मोटर छ। फेरि दोर्जे साहेब जस्ताले उनको मेनेजरलाई खरीद गरेर दिने मोटर राम्रै हुनुपर्‍यो। बरू कतिसम्म तिर्ने यहाँको विचार छ। म साथीहरूलाई भनिदिउँला।"

"त्यो त गाडी हेरेर भन्ने कुरा हो। राम्रो गाड़ी भएमा एक लाख सम्म तिर्न सकिन्छ।"

मैले मनमनै भनें—यो रकमले त मेरो जस्तो पाँच छः ओटा गाड़ी खरीद गर्न सक्छ। जो सम्झेर म घरबाट निस्केकोथिएँ, त्यसमा असफल भएँ।

यहाँ आइपुगेपछि ती महापुरुष जसको अमेरिका र जर्मनीमा पनि घर छ—सँग भेट्ने अभिलाषा भित्री मनमा जागिरहेछ। म अब त्यही योजना बनाउनमा व्यस्त छु। मैले सोच्दै गएँ—धेरै समय यूरोप र अमेरिकामा बस्ने दोर्जेको घरको बगैंचा र यो महलको बाहिरी आकृति पूर्ण यूरोपीय शैलीमा देखिरहेछु। घरको भित्री सजावट कस्तो होला ? जो म कल्पनासम्म पनि गर्न सक्दिन।

छिरिङ र मेरो कुरा-कानीबाट मेरो मोटर उनको लागि अयोग्य

साबित भइसकेको छ । म अब मोटर बेच्ने पक्षमा छैन । मेरो उद्देश्यमा परिवर्तन आइसक्यो । म यस घरको वातावरण सम्बन्धमा जानकारी लिने पक्षमा छु । मैले छिरिङलाई सम्बोधन गर्दै भनें—"तपाईंको कुरा गराईबाट तपाईं दार्जिलिङको जस्तो देखिनुहुन्छ, हो ?"

"हजुर, त्यतै हो ! कालिङपोङ ।"

"यहाँ कति भयो काठमाण्डू बस्नुभएको ?"

"दुइ वर्ष हुन लाग्यो ।"

"दुइ वर्ष देखि नै दोर्जे साहेबकहाँ हुनुहुन्छ ?"

"होइन, डेढ वर्ष भयो । त्यो भन्दा अगाडि एउटा बोर्डिङ्ग स्कूलमा पढाउँथें । छः महीना स्कूलमा शिक्षक भइ काम गरें ।"

मैले काठमाण्डूको स्थिति अगाडि राख्दै उनलाई भनें—"हो ! शिक्षक पेशाले काठमाण्डूमा बाँच्नै कठिन छ । तपाईंले पनि अनुभव गर्नुभयो । कस्तो लाग्यो तपाईंलाई ?"

"त्यही कारणले त मैले शिक्षक पेशा छाडेको । हुन त जुन बोर्डिङ्गमा म पढ़ाउँथें, त्यो बोर्डिङ्गले मलाई राम्रै तनखा दिएको थियो । महीनाको छः सय पचास रुपियाँले म एक्लोलाई पनि नपुग्ने । काठमाण्डूको स्टैण्डर्ड यही हो । के गर्नु ? बाँच्नै पर्‍यो ।"

"दोर्जे साहेबकहाँ त तपाईंलाई राम्रै होला नि ?"

"एकदम राम्रो ! बस्न यहीं बस्छु । खाना पनि फ्री छ । मोटरको सुविधा छ । तलब पनि 'हैण्डसम' छ । काम पनि त्यत्ति भीड़ छैन ।"

उनले साधारण किसिमबाट आफ्नो स्थिति मेरो अगाडि राखे पनि मेरो लागि दोर्जे साहेबको महत्व झन् बढ्दै छ । दोर्जे साहेबसँग भेट्न उपाय रच्दै मैले छिरिङलाई भनें—"दोर्जे साहेबसँग भेट्ने मलाई साह्रै ठूलो इच्छा छ । उहाँको नाम सम्बन्धमा परिचित थिएँ । आज संयोगले यहीं आइपुगियो । चिनाजानी भयो भने मैले पनि उहाँलाई कुनै सेवा पुर्‍याउन सक्थें कि ?"

उनले एक छिनसम्म केही जवाफ दिएनन् । मलाई 'भेट गराउँछु'

भन्न पनि सकेनन् । 'हुँदैन, भेट हुनसक्दैन' पनि भन्न सकेनन् । केही बेर-पछि उनले भने—"हुन त परिचय हुनु ज्यादै राम्रो कुरा हो। गाड़ी त तपाईंसँग मिलेन तर हाम्रो चिना-जानी त गाड़ीकै माध्यमवाट भयो। तपाईंले जो दोर्जे साहेवसँग भेट्ने कुरा गर्नुभयो, त्यो म अहिले भन्न सक्दिन।"

विनिम्रतापूर्वक छिरिङलाई आफ्नू आशय व्यक्त गरें—"तपाईंसँग परिचय भयो। अब एक अर्कालाई परिआएको समस्या प्रति सक्दो सहयोग पनि निश्चय प्राप्त हुन्छ। त्यसैले चिना-जानी भनेको ठूलो कुरा हो। उहाँको नामले गर्दा मलाई धेरै समयदेखि उहाँसँग चिना-जानी गर्ने इच्छा थियो। आज साँच्चै भन्नु भने मोटर देखाउन मात्र होइन, म उहाँलाई पनि भेट्न आएको हुँ। छिरिङजी! कृपयापूर्वक तपाईंले मद्दत गर्नुभयो भने मेरो वर्षौंको इच्छा पूर्ति हुन्छ!"

उनी मेरो कुरा सुनेर टोलिए। केही भन्न सकेनन्। शायद उनले सोचे होलान्—यो को हो? किन भेट्न चाहन्छ?—उनको मनको शंका-लाई हटाउँदै मैले भनें—"छिरिङजी! तपाईं दोर्जे साहेबलाई यत्ति भनिदिनुहोस्—एकजना अपरिचित स्थानीय व्यक्ति भेट्न आएका छन्। तपाईंलाई सहयोग गर्छु भन्ने इच्छा व्यक्त गर्छन्। भेटाउँ कि नभेटाउँ?—यसो भन्दा उहाँले भेट्न इच्छा व्यक्त गर्नु भएन भने नभेटुँला। यहाँले त्यति कष्ट गरिदिनुपर्‍यो मेरो लागि।"

"ठीक छ, तपाईंको यही इच्छा हो भने म एकपल्ट भनिदिन्छु। एकछिन वस्नुहोस्"—भन्दै वैठकवाट वगैंचातर्फ लागे।

दश मिनेटपछि उनी आई मसँग मेरो वारेमा सोध्न लागे—"तपाईंको नाम के? कहाँ वस्नुहुन्छ? किन भेट्ने? के काम गर्नु हुन्छ?"—मैले छिरिङलाई एक-एक प्रश्नको उत्तर दिएँ। आफ्नू काम सम्वन्धमा विशेष केही नभएको हुँदा 'काम त केही गर्दिन' भनेर भनें। यो पनि जोडें कि राम्रो कामको खोजीमा छु। उनी फेरि मलाई त्यहीं एक्लै छाडी गए।

पाँच मिनेट पछि छिरिङ प्रसन्न मुद्रामा मेरो सामु आएर भने—

"हिड्नु होस् ! तर उहाँसँग धेरै टाइम त छैन ।"

हामी दुवै खुला बैठकबाट बगैँचातर्फ झऱ्यौं । मैले मनमनै छिरिङलाई धन्यवाद दिएँ । उनले मैले भने भन्दा लम्बे-चौडे फुर्का नजोडिकन दोर्जे साहेवले भेट्ने इच्छा व्यक्त गरेका छैनन् । निश्चय पनि उनको काममा सम्मिलित हुन आएको कुरा छिरिङले दोर्जे साहेवलाई वताएको हुनुपर्छ । मलाई त केवल––दोर्जे साहेव कस्ता छन् ? उनको रहन-सहन कस्तो छ ? पुलचोकमा भेटेको व्यक्तिले भनेको शब्द र वास्तविकतामा कति मेल छ ?

हामी एउटा ठूलो हलमा प्रवेश गर्छौं । यो मुख्य बैठक रहेछ । त्यहाँ एक छिन बस्न लगाई छिरिङ त्यसभन्दा भित्रको कोठातर्फ लाग्छन् । यो बैठकको चारैतर्फ पूर्ण आरामी सोफाहरूले घेरिएको छ । यसको वीच भागमा आगो बाल्ने आतस खाना र वर-पर नेपाली शैलीका मूर्तिहरू र हस्त-कलाका सामानले बैठकको भित्ताहरू सिंगारिएका छन् । बैठकको सबै जसो भाग ऊनको गलैचाले छोपिएको छ ।

एकै छिनमा छिरिङ वाहिर आउँदै मलाई भित्रकोठामा आउने इशारा गर्छन् । म भित्रको कोठामा प्रवेश गर्छु । मैले त्यहाँ कुनै दोर्जे साहेवलाई देखिन । सिंगल सोफामा एउटा मानिस बसिरहेको मात्र देखें जसलाई म राम्ररी चिन्दछु । मैले सोचें – उनी पनि दोर्जे साहेवलाई नै भेट्न आएका होलान् । दोर्जे साहेवको प्रतीक्षामा म जस्तै उनी पनि छन् । मैले त्यसतर्फ ध्यान नदिएर छिरिङतर्फ हेर्दै भनें—"दोर्जे साहेव अझ यहाँ भन्दा पनि भित्र ?"

मेरो प्रश्न सुन्ने वित्तिकै छिरिङ अलमलिए । एक छिन केही भन्न सकेनन् । एक छिनपछि उनले भने—"उहाँ नै हुनुहुन्छ, दोर्जे साहेव !"

मेरो विश्वासको विपरीत उनले भनेकोमा म पनि एकक्षण अलमलिएँ । मैले दोर्जे साहेव को-को न होलान् भनेको त एउटा साधारण मानिस पो रहेछन् । त्यसमा पनि मैले पहिलेदेखि चिनेको ।

दोर्जे साहेव भनिएको व्यक्ति आजभन्दा आठवर्ष पहिले मैले चिनेको हुँ । तिब्बतियन शरणार्थीको रूपमा नेपाल प्रवेश गर्ने यो व्यक्तिले नेपाली

भाषा नजानेको हुँदा यिनलाई मैले मद्दत गरेको थिएँ। क्षेत्रपाटीमा दुइसय रुपियाँ प्रति महीनामा डेरा खोजेर मैले नै व्यवस्था गरिदिएको थिएँ। यिनको र मेरो त्यसै ताक दुइवर्षसम्म वाटो-घाटोमा वरावर भेट भइरहन्थ्यो। पाँच-छः वर्ष देखि यिनलाई मैले देखेको थिइन। आज देखें दोर्जे साहेवको रूपमा।

म उनीतर्फ वढ्दै भनें—"तपाईं हो दोर्जे साहेव ! मलाई चिन्नुभयो ?"

"किन नचिन्नु"—शान्त स्वभावमा उनले भने—"वस्नुहोस् !"

उनले मलाई चिनेकोमा खुशी लाग्यो। छिरिङ ढोका नजीकै उभिएर वसेकालाई दोर्जेले वाहिर जाने इशारा गर्छन्। छिरिङ वाहिर निस्कन्छन्। कोठामा म र दोर्जे मात्र हुन्छौं।

मैले दोर्जेलाई पुरानो सम्झना दिलाउँदै भनें—"होइन, तपाईंको नाम दुक्पा होइन र ?"

"हो।"

"कसरी दोर्जे भयो त ?"

"दुक्पा लामा काठमाण्डूको गल्लीमा मरिसक्यो। यो त दोर्जे वाँचेको छ।"

उनको कुरा सुनेर म हाँस्न पुगें। उनी पनि मेरो हाँसोमा स्वर मिलाउँदै हाँस्तै भने—"दुःखको दिन दुक्पाको थियो। सुखको दिन दोर्जेको हुन्छ।"

हुन त उनको र मेरो कुनै घनिष्टता थिएन। उनी जव तिव्वतवाट भारत हुँदै नेपाल प्रवेश गरे। त्यस वखत उनी नेपाली भाषा पटक्क वोल्न जान्दैनथे। एकजना साथी कहाँ उनको र मेरो परिचय भयो। त्यसताक प्रायः उनी अंग्रेजी नै वोल्दथे। हिन्दी वुझ्थे, वोल्न सक्दैनथे। उनीसँग वाँच्नेसम्मको केही पैसा थियो होला। उनले क्षेत्रपाटीमा डेरा गरेर वसे पछि पनि काठमाण्डूका सड़क गल्लीमा प्रायः भेट भइरहन्थ्यो। उनी के काम गर्थे, मैले उनलाई कहिल्यै सोधिन। मैले यति जानेको थिएँ उनी काठमाण्डूमा तिव्वतियन शरणार्थीको रूपमा छन्। आज

एकाएक यस अवस्थामा देख्दा मैले उनलाई दोर्जे साहेब भनेर तुरुन्त स्वीकार नगर्नु स्वाभाविक हो।

मैले उनलाई सुस्तरी सोधें—"दोर्जेजी! यत्रो प्रगति कसरी गर्नु भयो?"

मेरो प्रश्नलाई रोक्दै उनले भने—"छोड्दिनुहोस् यो कुरा। के पिउनु हुन्छ? वियर या स्कच?"

"धन्यवाद! म पिउँदिन"—मैले उनलाई भनें—"हुन सक्छ भने एक कप कफि।"

"बस! कफि मात्र?" भन्दै इन्टरकम सेटबाट दुइवटा कफिको आदेश दिन्छन्। अनि मलाई सम्बोधन गर्दै भन्छन्—"तपाईं के गर्दै हुनुहुन्छ?"

"काम त विशेष केही छैन।"

"केही काम नगरी काठमाण्डूमा बाँच्ने कसरी?

"खेती-पातीबाट आएकोबाट जसरी पनि पुर्‍याएर।"

"पुर्‍याउने कसरी? अमेरिका र यूरोप भन्दा काठमाण्डूमा खाना महँगो छ।"

"जस्तो भए पनि बेहोर्नै पर्छ। खानको लागि हामी बाँचेको भए पो खानलाई धेरै खर्च हुन्छ। हामी त बाँच्नको लागि खान्छौं। हामीलाई थोरै भए पनि चल्छ।"

मेरो विचार उनलाई मुनासिब लागेछ क्यारे उनी रमाउँदै भन्छन्—"ठीक भन्नु भयो! त्यो दिन मैले पनि गुजारें। मेरो मतलब काठमाण्डूमा साधारण खाने वस्तु पनि अरू ठाउँको तुलनामा महँगो नै छ।"

यसै बीच फोन आउँछ। उनी फोनमा कुरा गर्न थाल्छन्—हेलो, दोर्जे स्पिकिंग! गुडमार्निङ्ग एस० पी० साहेब! भन्नु होस्……के! पकडाउ खायो। कहाँ, हाम्रो एयरपोर्टमा?……बैंकक एयरपोर्टमा त हुनै न पर्ने…के एयरपोर्टमा सूटकेश जम्मा नगरी सिटी गएछ?…आज सिंगापुरबाट टेलेक्स आउँछ भनेर कुरेर बसेको।… ब्याड न्यूज थ्याङ्क्यू, ओ० के० ब-बाई।"

टेलिफोन राख्दै मतर्फ फर्कंदै भन्न लागे—"कच्चा मान्छेलाई काम लगाएपछि धोकामा परिन्छ ।"

वास्तविकतासँग म अनभिज्ञ भए पनि एकोहरो टेलिफोनिक वार्तालाप-बाट केही अनुमान गर्दै मैले दोर्जेलाई भनें—"कस्तो मूर्ख रहेछ ?"

मेरो प्रश्नको उत्तर दिन उनलाई कर लाग्यो । उनी मलाई तलदेखि माथिसम्म हेर्दै भन्छन्—"त्यही त भनेको ! कच्चा मान्छे, वैंककको रमझम, साँझ बिताउन हतारिएर निस्कियो होला । पकडाउ खायो ! त्यो पनि आजै इण्टरपोलले खवर गरेको रहेछ । जानकारी त छिटै पाएँ । अहिले म के गर्न सक्छु र ?"

उनको नोक्सान प्रति सहानुभूति देखाउँदै भनें—"धेरै नै पऱ्यो कि ?"

उनले आफ्नू खुट्टा कफिटेवुलमा सोझ्याएर दुवै हात मुख नजीकै लगेर विचार गर्दै भन्न लागे—"होइन धेरै त होइन, सिंगापुर पुगेको भए पाँच लाख यू० यस० डलरको थियो । अव नपुगेको हुँदा पाँचलाख रुपियाँको माल खरीद र आठ लाख रुपियाँ मिसलिनस खर्च गर्दा तेन्ह लाखको नोक्सान भयो ।"

मैले विस्तारै सोधें—"माल के थियो कुन्नि ?"

उनी मेरो कुरामा ध्यानै नदिई विचारमग्न भएर सोफामा लेटिरहेका छन् । एकैछिनमा इण्टरकमसेटवाट छिरिङलाई वोलाएर भन्छन्—"अहिले सिंगापुर कण्ट्याक्ट गरेर माल नआइपुग्ने कुरा पार्टीलाई वताइ-देउ ! साथै जुम्ला र दाङमा पनि खवर पठाउ । सात दिनभित्र त्यतिनै माल तयार हुनुपर्छ ।"

"माल सिंगापुर नपुग्ने भयो ? गुरुङ कहाँ गएछ ?"

"पकडाउ खाएछ वैङ्कक् एयरपोर्टमा ! इन्टरपोलले यहाँ खवर गरे छ । मैले भरखर खवर पाएँ । खवर त चाँडो पाएँ तर के गर्न सक्छु र ? त्यसैले माल तुरुन्त पठाउनु पऱ्यो ।"

छिरिङले दोर्जेलाई सम्झाउँदै भने—"सोनामसँग पनि दश लाखको माल छ भनेर अस्ति खवर गरेका थिए । त्यो वुक गरिदिउँ ?"

"हुन्छ। त्यो पनि खरीद गर र जुम्ला र दाङमा पनि अडर गर।"

छिरिङ बाहिर जान्छन्। दोर्जे आफ्नै काम विषयमा सोचिरहेका छन्। यत्तिकैमा कलकत्तावाट ट्रंक-कल आउँछ। उनी टेलीफोनमा कुरा गर्दै भन्छन्—"हेलो दोर्जे स्पिकिंग हियर, एस, काठमाण्डौं····ओ० के० · हो, दोर्जे बोलेको···चलिसक्यो ? डाइरेक्ट जनर्मवाला सिप होइन ? · ठीक छ ! ल, राम्रो ! तिमी आजै काठमाण्डू आए हुन्छ। ओ० के०।"

उनी लामो सास फेर्दै भन्छन्—"एउटा ठूलो हेड्याक पार भयो।"

उनको मनको कुरा म बुझ्न सक्दिन। उनी मसँग स्पष्ट कुरा गर्न चाहिरहेका छैनन्। जति एकोहरो कुरा सुनें त्यसबाट केही न केही अन्दाज लगाउन सके पनि म यस विषयमा उनीसँग कुरा गर्न सक्दिन। मेरो एक-दुइ प्रश्नको उत्तर दिन उनी हिचकिचाएका छन्। यस विषयमा मैले पूर्ण जानकारी नपाउने जिवो गरी म अर्को विषयमा प्रवेश गर्छु र सोद्धछु—"दोर्जेजी ! तपाईंको न्यूयार्क र पच्छिम जर्मनीमा पनि कारोवार छ भन्ने कुरा सुनेको थिएँ। त्यहाँको कारोवार कस्तो चलेको छ ?"

"कसरी थाहा पाउनु भयो ?"

"दोर्जेजी ! तपाईंको नाम त ज्यादै ठूलो व्यापारीमा गनिन थालेको छ। तपाईंको रूपसँग परिचित नमए पनि धेरै मानिसले तपाईंको नाम सुनेका छन्। यति कुरा किन थाहा नपाउनु ?"

उनी मेरो कुरासुनेर छक्क पर्दै भने—"के म यस्तो प्रचारमा आइसकेको छु ! तव त मुस्किल पर्‍यो !"

"केको मुस्किल ? नाम चल्नु त राम्रै हो।"

"प्रचारमा आएपछि मैले त्यत्ति पैसा कमाउन सक्दिन जति प्रचारमा नआउँदा कमाउन सक्छु। मैले सोचेको थिएँ, केनल म तारे होटेल र प्रहरीसँग मात्र परिचित छु। त्यसो भए तपाईं पनि मलाई भेट्न आउनु भएको प्रचारको कारणले नै हो त ?"

उनको शंका निवारण गर्दै मैले म आएको कारण बताएँ। मेरो मोटर छिरिङले मन नपराएको र काम नलाग्ने पुरानो भएकोले खरीद

बिक्री हुन नसक्ने स्थिति पैदा भएको कुरा पनि उल्लेख गरें। मोटरको खरीद-बिक्री नभए पनि घरको मालिकसँग भेटुँ भन्ने इच्छा पैदा भएको हुँदा भेट भएको कुरा विस्तारसँग प्रस्तुत गरें।

विस्तृत रूपमा म भेट्न आएको कारण बताइसकेपछि उनले भने—"हो ह्यामबर्ग र न्यूयार्कमा कारोबार छ। यही हाम्रो नेपाली हस्तकलाका सामान र तिब्बेतियन र नेपाली गलैंचाको बिक्री-कक्ष खोलेको छु। सबैतिर आफैंले हेर्नुपर्छ। वर्षमा धेरै जसो उतै बस्छु। सानो-सानो फ्ल्याट पनि छ। केटाकेटीहरू पनि उतै बस्छन्।"

मैले उनलाई सोधें—"त्यसो भए तपाईं उतैतिरको नागरिक बनिसक्नु भयो कि ?"

"होइन ! यहींको नागरिक छु। त्यहाँको नागरिक हुन स्टेटको फर्मालिटिज् पूरा गर्नुपर्छ। बड़ी गाह्रारो छ। यहाँको जस्तो होइन !"

"ए, यहाँको नागरिकता लिइसक्नु भएको छ ?"

"लौ ! नलिए यति ठूलो व्यापार मैले कसरी गर्ने ? लिइसकें। यसैबाट त मैले यति ठूलो कारोबार गर्ने मौका पाएँ।"

उनले विषयवस्तु बदल्दै मलाई भने—"के तपाईं मसँग काम गर्न चाहनु हुन्छ ? तपाईं मेरो पुरानो परिचयको मान्छे। तपाईंलाई मेरो पहिलेको सबै कुरा थाहा छ। जतिसुकै म धनी भएर दोर्जे साहेब भए पनि तपाईंको नजरमा दुक्पा लामा नै छु। तपाईंको मनमा परिवर्तन तपाईं मसँग मिलेर काम गरे पछि हुन्छ। तपाईंले मलाई साथी सम्झेर मसँग काम गर्नु भएमा तपाईंलाई ठूलो लाभ हुन्छ।"

म काम खोज्न दोर्जेलाई भेट्न चाहेको होइन। मलाई त केवल दोर्जेको काम कस्तो छ ? त्यही बुझ्नु थियो। स्थिति ठीक आएको हुँदा मैले उनलाई भनें—"हेर्नुहोस् दोर्जेजी ! काम गर्छु मात्र भनेर हुँदैन। त्यसको साथै समयले पनि साथ दिनु पर्छ। फेरि मसँग पैसा छैन। यति ठूलो काम, म तपाईंसँग मिलेर कसरी गर्न सक्छु ? मलाई तपाईंले उपहास गरे जस्तो लाग्यो। न म गर्न सक्छु, न तपाईं गराउनु हुन्छ।"

दोर्जे मलाई सम्झाउँदै भन्छन्—"केवल तपाईं गर्ने इच्छा मात्र गर्नुहोस्। बाँकी वन्दोवस्त म सबै मिलाउँछु। तपाईं जस्तो स्थानीय व्यक्तिको मलाई धेरै आवश्यकता छ। त्यसमा पनि तपाईं मेरो पुरानो परिचित व्यक्ति। तपाईंलाई सहयोग नगर्ने कुनै कारण छैन। यो लाइनको काम पैसा भएर मात्रै गर्ने काम होइन। यो त बुद्धि र चालवाट कसैको सहयोगद्वारा गरिने काम हो। यो लाइनमा प्रवेश गर्न भित्री दिललाई बाँधेर आफूलाई यसमा समर्पित गर्नुपर्छ। तब जादु गरे जस्तो दिन दोवर रात चौवर प्रगति हुँदै जान्छ। फेरि यो देशमा यो काम गर्न बडो सजिलो छ। यो मौका सधैं रहँदैन!"

उनी भन्दै जान्छन्—"हेर्नुहोस्, तपाईंलाई थाहै भएको कुरा हो। म काठमाण्डू आउँदा कुन स्थितिको थिएँ। तपाईंहरूले नै मद्दत गर्नुपर्ने मेरो स्थिति थियो। आज मैंले गर्दै गएँ म यो हैसियतमा पुगें। त्यसैले गर्नको लागि एउटा अठोट वनाउनु पर्छ र गर्दै जानु पर्छ। समय आफैं सृजित भई हाम्रो सामु खड़ा हुन्छ। समयले हामीलाई वनाउने होइन, हामीले समय वनाउनु पर्छ।"

दोर्जेको मनसाय मैले बुझें। मेरो माध्यमवाट अरू कुनै काम गर्न चाहन्छन्। उनलाई अझ रुपियाँले पुगेको छैन। यो रुपियाँ कमाउने मानिसको नशा कहिले नटुंगिने क्षितिज जस्तो हुँदो रहेछ। यिनलाई यत्रो धन दौलत भएर पनि यिनले काम छोडेका छैनन्।

म उनको विचारको प्रतिकूल जान चाहन्न। उनको विचारलाई बढ़ावा दिंदै भने—"दोर्जेजी! यहाँको विचार शत-प्रतिशत ठीक हो। समय हामीले वनाउनु पर्छ। समयले हामीलाई चलायो भने त हामीले केही गर्न सक्दैनौं।"

उनी म प्रति आकृष्ट हुँदैछन्। पहिले केही नवताउन चाहेका दोर्जे अब आफ्नू गाँठो विस्तारै फुकाउँदै छन्।

यसै वीच एउटी भरखरकी केटी दुवै हातमा ट्रे समातेर कफि पट ल्याई हाम्रो अगाडि राखिदिन्छिन्। दोर्जेको आदेशानुसार दुवै कपमा कफि

बनाई दिन्छिन् । हामी दुवै कफि चुस्न थाल्छौं । युवती कोठाबाट बाहिर निस्कन्छिन् ।

कफि पिउँदा-पिउँदै दोर्जे भन्छन्—"हेर्नुहोस् ! यो व्यापार बारेमा तपाईंलाई म सानो नमूना पेश गर्छु । जो मेरो जीवनसँग सम्बन्धित छ । तपाईंले पनि मेरो प्रगति बारे सोध्नु भयो । त्यसैले तपाईंलाई कुनै कुरा नलुकाई भन्छु किनभने तपाईंले मेरो हिजोको दिनहरू पनि देख्नु भएको छ । मेरो जीवनमा घटेको घटना बताउँछु । सुन्नुहोस् ! जब म काठमाण्डूको गल्ली चहारेर साँझ एउटा रेष्टुराँ मा शान्तिको लागि रक्सी पिउन थाल्थें, त्यहाँ मैले धेरै विदेशी साथीहरू बनाउँदै गएँ । अकस्मात् एक दिन मेरो टेबुलको साइडमा एक जर्मन बसेर नक्सा कोरिरहेको देखें । उसको र मेरो बीचमा कुरा हुन लाग्यो । घण्टौंसम्म कुरा भएपछि उनको र मेरो दोस्ती कायम भयो । उनले लेखेको नक्सा बारेमा उनको होटलको कोठामा गई सम्झाउने इच्छा व्यक्त गरे अनुसार म त्यहींबाट उनको होटेलको कोठामा गएँ । उनले मलाई एउटा देवताको मूर्ति देखाउँदै भने—यो यहाँ छ, मंदिरमा यतिवटा ढोका छन्, ढोका यस किसिमबाट लाग्छ, यति समयदेखि यति समयसम्म मानिस रहन्छन् । सबै वैज्ञानिक तरीकाले विश्लेषण गरेको कागज दिए र भने--यदि यो मूर्ति काठमाण्डूमै हैण्ड-ओभर गरे पचास हजार दिने, जर्मनमा पुऱ्याइदिए तीन लाख दिने । पचास रुपियाँ गोजीमा नभएको म त्यस मन्दिरमा घुम्न लागें । निकै दिनको प्रयासपछि एउटा स्थानीय व्यक्तिको सहयोगले मेरो डेरामा मूर्ति आइपुग्यो । जसले सहयोग गऱ्यो त्यसलाई एक हजार दिएँ । सम्झौता अनुसार जर्मनले मलाई दिएको पैसाबाट मैले आफ्नू बिजनेस जमाउन थालें । पछि म बिजनेसको क्रममा जर्मन पुगेको थिएँ । जर्मनमा एक जना साथीको ड्रइङ्ग रूमको आकर्षणको केन्द्र भई त्यो मूर्ति रहेको रहेछ । मैले उनलाई मूर्ति बारेमा सोध-खोज गरें, एकजना फ्रेंचले एक लाख मार्कमा बेचेको रहेछ । मैले उनलाई 'अब कति पाए बेच्छौं' भन्दा 'छ: लाख मार्क पाए बेच्छु भने ।' म न्यूयार्क गई त्यहीं मूर्तिको पाँच लाख डलर तय गरी आएँ । पछि जर्मनबाट त्यो मूर्ति न्यूयार्क

पुऱ्याई पाँच लाख डलरमा बेचें। अब भन्नुहोस्, यो बिजनेसको कुनै सीमा रहेछ ? हुन सक्छ त्यो मूर्ति अझ कतिमा बिक्ने हो। जुन मूर्तिको सर्वप्रथम एक हजार मूल्य निर्धारण भएको थियो। त्यही मूर्ति मैले दुइ पल्ट बेचें। प्रत्येक पटक स्थिति अनुसार 'म्याक्सिमम' मुनाफा कमाएँ। साँच्चै भनुँ भने मेरो 'लाइफ' नै त्यही मूर्तिले बनायो।

उनी भन्दै जान्छन्—"तपाईंलाई के भन्ने ? यो काममा हामीलाई सबैतर्फबाट सहयोग छ। साथै काठमाण्डूका जति पनि ठूला भनी भन्नुहुन्छ प्रायः सबैले यस्तै 'अवैध' भनिएको काम गरेका छन्। किनभने रुपियाँ यसैमा छ ! रुपियाँमा इज्जत छ ! सम्झनुहोस्, काठमाण्डूमा चम्कने कार चिप्लाउने व्यक्तिको आँखामा हेर्नुहोस्, स्पष्टसँग तपाईंले अवैध व्यापार चम्किरहेको देख्न सक्नु हुनेछ। सानो अवैध ! ठूलो अवैध !! बस, फरक यत्ति छ !"

उनको कुरा नटुंगिदै इण्टरकमसेटको घण्टी बज्छ। उनी सेटमा कुरा गर्न थाल्छन्—"हेलो....राजा साहेब....भित्र पठाइदेउ।" —दोर्जेले रिसिभर नराख्दै एक व्यक्ति कोठामा प्रवेश गर्छन्।"

"आउनुहवस् ! राजा साहेब आउनुहवस् !"—दोर्जे ती व्यक्तिको स्वागत गर्दै भन्छन्—"धेरै समयपछि दर्शन पाइयो हजुरको ?"

म बसेको ठीक अगाडिको सोफामा बस्दै उनले मलाई नियाल्न थाल्छन्। मलाई विश्वास छ, मलाई उनले चिन्दैनन्। तर म उनलाई चिन्दछु किनभने उनी नेपालको एक कहलिएका समाजसेवी हुन्। 'ठूलो बाउ-साहेब' भनेपछि पश्चिमाञ्चलका बच्चा-बच्चाले चिन्दछन्। काठमाण्डूमा पनि उनलाई धेरैले चिन्छन्। कुन त्यस्तो सामाजिक संस्था नेपालमा होला, ठूलो बाउ-साहेबले योगदान नगरेको। मैले उनलाई आदरको दृष्टिले हेर्ने गरेको थिएँ, तर एकाएक यहाँ देखेर म छक्क परें। मेरो परिचय दिंदै दोर्जेले बाउ-साहेबलाई भने—"उहाँ मेरो पुरानो साथी हो। उहाँ पनि मसँग काम गर्न लाग्नु भइरहेछ।" बाउ-साहेबको परिचय दिंदै दोर्जेले भने—"राजा साहेब हाम्रो संरक्षक भने पनि हुन्छ। उहाँकै सहयोगबाट

हामीले काम गरिरहेका छौं। तपाईंलाई यो पनि भनिदिउँ, राजा साहेवकै सहयोगवाट मैले नागरिकता वनाएको हो।"

दोर्जेको स्पष्ट कुराले वाउ-साहेवलाई अपठ्यारो भयो। उनले आफ्नू लज्जित अनुहारलाई प्रसन्न वनाउँदै भने—"के कुरा गरेको दोर्जे साहेवले पनि? तपाईं मनाङमा जन्मनुभएको मानिसलाई नागरिक वनाउन केको मद्दत गर्नुपर्छ? त्यो त तपाईंको जन्मसिद्ध अधिकार हो!"

वाउ-साहेव मेरो अगाडि केही कुरा गर्न चाहन्नन्। त्यसैले उनले दोर्जेलाई अर्को कोठामा गई गोप्य गर्ने आशय व्यक्त गरे। दोर्जेले मलाई एक छिन वस्न भन्दै दुवै अर्को कोठातर्फ गए। करीव पन्ध्र मिनेटपछि दोर्जे म वसेको कोठामा प्रवेश गर्दै भने—"राजा साहेव हिंड्नु भयो। यिनीहरूलाई 'व्यालेन्समा' राख्न वडो मुश्किल छ। काम गर्छन् छेरुवा तालले खान खोज्छन् शेरको छाँटले।"

मैले वुझ्न सकिन उनको मनाइको अर्थ, कोट्याउने पनि कुरा भएन। मैले वाउ-साहेवको वारेमा कुरा निकाल्ने ठाउँ नै छैन। म चुपचाप नै रहें। दोर्जे आफ्नू स्थानमा आई वसेर भने—"म काठमाण्डू एक हप्ता वसें भने तीन चार लाख त वाँड्दै ठीक हुन्छ। तर जे होस् खाए अनुसार आजसम्म राम्रै गरेका छन्।"

मैले उनको कुरालाई वढावा दिंदै भनें—"यसरी दिन सक्ने आफूसँग क्षमता हुनु राम्रै हो। फेरि तपाईंको नून खाएपछि तपाईंको सोझो पनि त चिताउँछन्।"

मेरो कुरा नटुंगिदै उनले सहमति जनाउँदै भने—"ठीक भन्नुभयो! यहाँका मान्छे त साह्रै सीधा छन्। एक छाक मात्र खान पाए पनि दिनभरि सलाम ठोकेर वस्छन्। दिन र खुवाउन सक्नुपर्छ, यिनले वाउ-आमा वरावर मान्यता दिन्छन् र यति इमानदार छन् जति एउटा मालिक प्रति कुकुर हुन्छ।"

दोर्जेको यो वाक्य मेरो चेतन मस्तिष्कले स्वीकार्न सक्दैन। मलाई कता-कता नराम्रोसँग विझ्दछ। त्यस शब्दको विरोधमा म भीषण प्रति-

क्रिया जनाउन खोज्छु। असन्तुलित मेरो मस्तिष्क दोर्जे प्रति आक्रमण गर्न खोज्छ। तर केवल दोर्जे र म मात्र भएको बन्द कोठामा म बौलाहा साबित हुनसक्छु। म आफू समालिँदै शिष्ट भाषामा दोर्जेलाई भनें— "दोर्जेजी ! तपाईं यहीं बसेर यहींको नागरिकको रूपमा संसारमा चिनिनु भएको छ। तर यहाँका मानिसलाई तपाईं किन यति नीच सम्झनु हुन्छ ?"

जवाफमा उनले भने—"मैले त यहाँका मान्छेको इमानदारीको 'एग्जाम्पल' दिएको। मेरो भनाइ यहाँको मान्छेमा इमानदारी काफी छ। यो कुरा छोडिदिउँ ! कामको विषयमा कुरा गरौं।"

दोर्जेले मेरो मनको भावना बुझेर विषय वस्तुलाई पन्छाउँदै अर्को विषय उल्लेख गर्न लागे।

मैले सोचें—यिनीसँग मात्र यस विषयमा बहस गर्नु बेमुनासिब हो। जो उनको अनुभव थियो, त्यो व्यक्त गरे। अनुत्तरदायी नागरिक भएको यो समाजमा एकले अर्काको प्रतिनिधित्व गर्न सक्दैन। आ-आफ्नू डम्फूले नचाइरहेछ सबैलाई चाहेर हो वा नचाहेर पनि। दोर्जेले बदलेको विषय वस्तुमा मैले चाख नदेखाउँदा पनि उनी भन्दै जान्छन्—"बुझ्नुहोस् र विचार गर्नुहोस् तपाईं ! यो हाम्रो काम कैयौंहरूले गरेजस्तो देश खोक्रो पार्ने काम होइन। हामी कृत्रिम अभाव खड़ा गरी मूल्यलाई उतार-चढाव गर्दैनौं। पाँच प्रतिशतको खर्चमा लाइसेन्स निकालेर शत-प्रतिशत जनता द्वारा निकाल्दैनौं। राजस्वलाई धक्का दिंदैनौं। हाम्रो त फियर विजिनेस छ। सड़े-पड़ेर जाने जंगलका वस्तुहरू उपयोगमा ल्याउँछौं। अनुत्पादित मूल्यहिन वस्तुको मूल्य निर्धारण गर्छौं, जसबाट कसैलाई बेफाइदा छैन। जसले यो काम गर्छ त्यसलाई फाइदै फाइदा छ।"

दोर्जे आफ्नो काम र अरूको कामसँग दाँज्दै भन्दै जान्छन्—"हेर्नुस् ! हामी त्यस्तो काम गर्दैनौं, जसद्वारा यो देशलाई नोक्सान होस्। आफ्नो दायित्व र अख्तियारलाई बिर्सेर धनको लालचमा आँखा चिम्लेर सहीछाप गरेर देशलाई धोखा दिंदैनौं। जनप्रतिनिधि भनाउँदाले जस्तो 'मुखमा राम-राम बगलीमा छूरा' राख्न हामीलाई पर्दैन। हाम्रो काम त स्ट्रेट

फारवार्ड छ। त्यसैले यसमा काम गर्न हिचकिचाउनु पर्ने कुनै कारणनै छैन।"

दोर्जेको दृष्टिकोण मेरो सामु स्पष्ट आइसक्यो। निर्भीकताका साथ उनले आफ्नू विचार व्यक्त गरे। उनको काममा उनी पूर्ण सन्तुष्ट छन्। अरूको काममन्दा उनको काम स्वच्छ र निर्मल छ भन्नेमा पनि उनी घमण्ड गर्छन्। उनको भनाइ अनुसार मैले उनीसँग प्रश्न गर्ने कुनै ठाउँ पाउँदिन। म चुपचाप उनको भनाइ मात्र सुन्दै गइरहेछु।

उनी भन्दै जान्छन्—"यहाँको मान्छेमा हिम्मत छैन! सम्झनुहोस्, बुद्धि छैन! हुन त म यसै कारणले नै दुक्पाबाट दोर्जे भएँ। केही वर्षमा नै मेरो यती हैसियत भयो। मेरो व्यक्तिगत लाभको दृष्टिकोणले त यो हुनु राम्रै हो, तर पनि म चाहन्छु सबै मजस्तै हैसियतवाल हुन सकुन्। केही यहाँका इज्जतदारहरू त यो काममा सरीक छन्। त्यसैले म तपाईंलाई जोड गर्छु कि प्रवेश गर्नुहोस् यो काममा तपाईं आँखा चिम्लिएर!"

म टोलिएर उनको कुरा सुनिरहेको छु। म उनको कुरामा असहमति जनाउन सक्दिन र उनको आग्रहलाई स्वीकार गर्न पनि सक्दिन। उनको भनाई जति स्पष्ट भए पनि मेरो नजरमा उनको काम अवैध हो। यही आफ्नू विचारलाई स्पष्ट गराउने इच्छाले म विस्तारै भन्छु—"दोर्जेजी! जो यो काम भन्नुभयो, यो ऐन नियमको विपरीत काम कसरी गर्ने? फेरि कानूनी बन्धनबाट उम्कन सधैं सकिदैन!"

मैले आफ्नू विचार पूरा व्यक्त गर्न नपाउँदै उनी भन्न थाले—"तपाईं मलाई बताउन सक्नु हुन्छ कि यस्तो काम गर्ने मानिस कहिले र कहाँ कानूनको नजरमा परेको छ?"

"समाचारपत्रमा कहिलेकाहीं पढेको छु।"

"के त्यो समाचारपत्रमा छापेको खबर अनुसार पकडाउ खाएको मानिस हामी जस्तो हो?"

"त्यो त भन्न सक्दिन!"

"तब? हेर्नुहोस्! ती त साधारण कामदार हुन्। जसलाई हामी एक

या दुइ हप्तामा कानूनबाट मुक्त गराई छोड्छौं। कहिले त काम गरेको देखाउन हामीसँगै सोधी पकडाउ गर्छन्। यो त केवल तपाईं जस्तो साधारण मान्छेको आँखामा छारो हालेको हो। ताकि 'कानूनको नजर यसमा पनि छ' भनेर साबित गराउन गर्छ। जो यसै विषयको आधारमा सजाय पाएर बसेका छन् भने ती सबै परिबन्दमा फसाई राखिएका हुन्। जो वास्तविक यो काम गर्छ, त्यो कहिले फस्न सक्दैन, म यो दावाको साथ भन्न सक्छु। विश्वास गर्नुहोस्! हाम्रो ग्याङ्गमा तलदेखि माथिसम्म 'सेटिङ' मिलाएका छौं। हालको स्थितिमा हामी सबै क्षेत्रबाट संरक्षित छौं। हामीलाई कसैले केही गर्न सक्दैन। तपाईंलाई थाहा छ? केही महीनाअघि पाँच लाखको अवैध सामान पकडाउ खाएको व्यक्ति अहिले आरामसँग हिँडिरहेछ। उसलाई कानूनले कुनै छेक-थुन गर्न सकेन। भन्नु-होस् अब! यो कामलाई सरकारले नियन्त्रण गर्न सक्छ? बन्द गराउन सक्छ? तपाईंलाई म विश्वास दिलाउन चाहन्छु र म स्पष्ट भन्छु कि यो हामीसम्म पुग्नै सक्दैन। तपाईं जो अवैध भन्नुहुन्छ त्यो वैध हो किनभने कानूनको नजरमा हामी सधैं सफा छौं! राम्रो छौं!! असल छौं!!!"

दोर्जेको विचारको प्रतिकूल म विवाद खडा गर्न चाहन्न किनभने उनले वर्तमान स्थितिलाई पूरा बुझ्न तर्क प्रस्तुत गरेका छन्। उनको भनाइ कत्तिको ठीक हो भनी म वर्तमानसँग तुलना गर्न थाल्छु। उनको भनाई शत-प्रतिशत मिल्दो छ, मेरो समाजको वर्तमान स्थितिसँग।

म दोर्जेकहाँ बसेको पनि धेरै बेर भइसक्यो। जो उत्सुकता लिएर दोर्जेलाई भेट्न चाहेको थिएँ, पूरा भयो। मैले उनलाई नजीकबाट बुझ्ने मौका पाएँ। नाममात्र सुन्दा मेरो दिलमा जो कौतूहल पैदा भएको थियो भेट-घाटमा मलाई साधारण लाग्यो। वास्तविक जीवनसँग परिचय हुँदा कुनै अनोठो नहुँदो रहेछ।

मैले दोर्जेसँग विदा माग्दै भनें—"दोर्जेजी। धेरै समय तपाईंको लिएँ! परिचय भयो। फेरि आउँदै गरौंला, अब जाउँ पनि।"

उनको कुरामा सहमति मैले नजनाएको हुँदा उनले त्यस कुरालाई फेरि

उनीसँग मिलेर काम गर्ने उनको आग्रह बार-बार
दोहराउन थाले।
दोहराउन थाले। मैले उनलाई यति नै भनें—"दोर्जेजी ! अब परिचय
भयो, आउँदै गर्छु। तपाईंसँग मिलेर काम गर्ने बारेमा केही दिन म विचार
गरूँ। केही दिनपछि म फेरि आउँछु।"
त्यसपछि उनले मलाई रोक्न सकेनन्, अन्तमा उनले यही भने—"जरूर
आउनु होला ! सदैव तपाईंलाई स्वागत छ !"
दोर्जेसँग विदाहुँदै म भित्री कोठाबाट निस्कें। बाहिरी बैठकमा चार-
पाँच जना बसिरहेका देखें। एकाएक म ती व्यक्तिहरूको अनुहार नियाल्न
पुग्छु। मैले कहिल्यै नदेखेका अनुहारहरू पनि मलाई निशाना लगाउँछन्।
छिरिङको खोजीमा मेरो आँखा फेरि कैऽकहो चारैतर्फ दौडन्छ। म
छिरिङलाई देख्दिन।

बाहिरी बगैंचामा अर्का एक व्यक्तिसँग कुरा गरीरहेका छिरिङले
मलाई देख्ने बित्तिकै अनौठो अनुहार लगाउँदै मतर्फ बढेर भने—"अहो !
तपाईंले त धेरै टाइम पाउनु भयो। यहाँ दोर्जे साहेबलाई भेट्न कत्ति
मानिस आइसक्नु भयो। कुराकानी कस्तो भयो ? क्रूटफुल ?"

"अँ, भन्नु पर्‍यो।"

"तब त आउँदै गर्नुहोला ?"

"हेरूँ !"

"हेरूँ के ? आउनुहोस् जरूर ! हाम्रो साहेब यति लामो समयसम्म
कहिले कुरा गर्नु हुन्न थियो। बढी गर्नुभयो भने पाँच-दश मिनेट। आजको
तपाईंहरूको बसाई देखेर त म सहजै अनुमान गर्न सक्छु कि तपाईंहरूले
एउटा विशेष योजना तयार गर्नु भएको हुनुपर्छ।"

"होइन, कुनै योजना बनेको छैन।"

"जे होस्, तपाईं आउनुपर्छ !"

"हस्"—मैले हाँस्तै औपचारिकता पूरा गरें।

म दोर्जे सदनबाट आफ्नू घरतर्फ लागें। बाटोभरि मलाई दोर्जेको त्यो
अर्ध उज्यालो बन्द कोठाभित्र नै बसिरहेको अनुभव भयो। मेरो मनभित्र
उत्तररहित प्रश्नहरूआउन लागे—इमान्दारिता ? नैतिकता ?? सत्यता ???



# शुक्रवार

विक्रमको प्रतीक्षामा आजको मेरो पूरा विहान वितिसक्यो, अझ पनि आएका छैनन्। कहीं वाहिर निस्कौं भने पनि आइपुग्लान् भन्ने आशाले निस्कन खोजेर पनि निस्कन सकेको छैन। खाना खाने समय भयो। मैले निश्चय गरें—खाना खाउञ्जेल सम्ममा पनि विक्रम आएनन् भने कतै वाहिर निस्कन्छु।

विक्रम काठमाण्डूमा हुर्केको केटो। सानै उमेरदेखि आफ्नू काम गरी आफ्नै खुट्टामा उभिएको ठिटो। उमेरमा म भन्दा सानै भए पनि परिपक्व र पाको विचार भएको विक्रम कुरा गर्दा दिल खोलेर आफूलाई पेश गर्छन्। वास्तवमा भनुँ भने म उनीसँग कुरा गर्न रूचाउँछु। उनीसँग मेरो भेट हुँदा म साह्लैरमाएको हुन्छु। हुनत उनको र मेरो कुनै लेन-देन व्यवहार छैन। केवल मित्रता मात्र हो। साथै उनी मेरो भाइको साथी हुँदा मलाई उनले 'दादा' भनी सम्वोधन गर्छन्। मैले उनलाई भाइको संज्ञा दिए पनि मित्रको रूपमै स्वीकारेको छु।

विक्रमको व्यवसाय 'निर्माण सेवा' हो। उनले करीव वाह्र वर्षदेखि निर्माण कार्यको ठेक्का लिने काम गरी आएका छन्। विकासोन्मुख देशमा निर्माण कार्य धेरै नै चल्ने हुँदा विस्तृत क्षेत्रको दृष्टिकोण राखी उनले यो व्यवसाय अपनाएका हुन्। उनले स-सानो कटेरोको निर्माण र मन्दिरहरूको जीर्णोद्धारको कामवाट आफ्नो कार्य शुरू गरेका हुन्। क्रमशः उनले आफ्नू कार्य-क्षमताको विकास गर्दै वाटो-घाटो, कलभर्ट-पुल र विशाल भवनहरू पनि वनाइ सके। उनको भनाइ अनुसार—यो देशमा सबैभन्दा राम्रो व्यवसाय निर्माण सेवा हो। साधारणतः उनी इमान्दार र नैतिक व्यक्ति मध्येका

हुन । तर यस व्यवसायभित्र आफ्नो इमानदारीता र नैतिकता जोगाउन नसकेको कुरा पनि उनले समय-समयमा बताएका छन् ।

विक्रमसँग मेरो बराबर भेट भइरहन्छ । उनको र मेरो भेट भएपछि एक-दुइ घण्टा बित्नुमा कुनै आश्चर्य छैन । स्पष्ट वक्ता विक्रम कुरा-कानी गर्दा सम्पूर्ण शरीर फेंकेर वातावरणलाई रमाइलो तुल्याउँछन् । त्यसैले उनीसँग कुरा-कानी गर्न म ज्यादैनै रुचाउँछु ।

म खाना खाइसकेर कपड़ा लगाउँदै छु । एक्कासी ड्रइङ्ग रूममा गुन्जे-को हाँसो मेरो कानमा पर्छ । हतारिँदै कपड़ा लगाई म ड्रइङ्ग रूममा पुग्छु ।

"दादा नमस्कार !"—विक्रम सोफाबाट उठ्दै मलाई अभिवादन गर्छन् ।

उनीसँग बसिरहेका एक अपरिचित व्यक्तिलाई संकेत गर्दै म विक्रमलाई भन्छु—"उहाँलाई मैले चिन्न सकिन !"

"उहाँ हाम्रो साइटको इन्जीनियर साहेब हुनुहुन्छ । दादालाई परिचय गराउँ भनेर ल्याएको ।"—भन्दै विक्रम मेरो परिचय दिन्छन् ।

तीर्थरत्नले मेरो नाममात्र सुनेका रहेछन् । धेरै दिनदेखि मलाई भेट्ने इच्छा व्यक्त गरे अनुसार विक्रमले तीर्थरत्नलाई ल्याएका रहेछन् । हुन त तीर्थरत्न एक इन्जीनियर, उनको र मेरो विषय अलग-अलग भए तापनि विक्रमको मप्रतिको श्रद्धा र विश्वासले तीर्थरत्नलाई मसँग भेट्ने उत्कण्ठा जागेको रहेछ । जो मैले पहिलो कुरा-कानीको थालनीमै थाहा पाएँ ।

विक्रमले तीर्थरत्नको बारेमा धेरै कुरा सुनाए । उनी एक भलाद्मी र इमान्दार इन्जीनियर रहेछन् । भारतको रुड़कीमा सिभिल इन्जीनियरिङ्गको डिग्री प्राप्त गरेका तीर्थजीले दशवर्ष देखि श्री ५ को सरकारको सेवा गर्दै आएका रहेछन् । उनलाई एउटै दुःखले सताएको रहेछ, त्यो हो—प्रमोशन । उनका साथीहरूमध्ये उनीमात्र असिस्टेण्ट इन्जीनियरको पदमा बस्नुपरेको छ । तीन जना त सुपरिटेण्डीङ इन्जीनियर भइसकेका रहेछन् । छिसिडनल इन्जीनियर हुने प्रबल इच्छा राख्ने तीर्थजी आफ्नू मान्छे माथि नभएकोले हुँदा प्रमोशन नभएको कुरा बताउँछन् ।

तीर्थजीको बारेमा अझ जानकारी लिने आशाले मैले सोधें—"तीर्थजी!

तपाईं यो दश वर्षको अवधिमा कुन-कुन कार्यालयमा काम गर्नु भयो ?"

उनले गम्भीर मुद्रामा जवाफ दिए—"भारतबाट आउनेबित्तिकै म खाने-पानीमा खटिएँ। तीन वर्ष त्यहाँ काम गरेर खाने-पानी सम्बन्धमा केही जानकारी हासिल गरिसकेको थिएँ। सिंचाई मन्त्रालय अन्तरगत विभिन्न योजनामा काम गर्ने गरी सरुवा गरिदियो। खाने-पानीमा काम गरिरहेकोलाई सिंचाईमा खटाएपछि मैले कसरी काम देखाउने ? कम से कम एक दुइ वर्ष त नयाँ काम बुझ्नै लाग्दछ। मैले सिंचाईमा केही काम देखाउन सकिन। फेरि दुइ वर्ष पनि नपुग्दै विद्युत विभाग अन्तरगत जल-विद्युत योजनामा काम गर्ने गरी खटिएँ। यसै गरी सड्क विभाग र स्थानीय विकास विभाग हुँदै अहिले भवन विभागमा छु। जहाँ गएँ म त्यहाँ नयाँ रहें। केही जान्न र थाहा पाउन थालेपछि म हुत्तिन्थें—एउटा सिकारू खेलाड़ीको खुट्टाबाट फुटवल हुत्तिए जस्तो।"

उनी भन्दै जान्छन्—"हेर्नुहोस् न, यी माथिल्लो दर्जामा बस्नेहरूले के सोच्दा रहेछन् भने इन्जीनियर पढ़ेर आउनेबित्तिकै सबै कुरा जानेको छ सबै कुरा गर्न सक्छ। कुनै ठाउँमा काम गर्दा त्यहाँको विषयमा सबै कुरा जानकारी भएपछि न काम गर्न सकिन्छ। यो कुरा बुझ्ने होइनन्, जाने बुझेर मैले काम नगरेको भनी चार्ज लगाउन मात्र सिपालु छन्। मेरो मान्छे माथि भइदिएको भए म आजसम्म चीफ इन्जीनियर भइसक्थें होला। किनभने एकै विभागमा बसेर काम गर्न पाएको भए त्यस काम सम्बन्धमा मैले विशेष ज्ञान प्राप्त गर्ने थिएँ। अनुभवी र पुरानो हुँदै गएको आधारमा प्रमोशन दिनेलाई पनि सजिलो हुन्थ्यो। जुनसुकै कार्यालयमा पनि म नयाँ र मेरो लागि कार्यालय नयाँ हुँदै गयो।"

मैले आफ्नू विचार व्यक्त गर्दै उनलाई भनें—"यसरी सबै अड्डा घुम्न पाउँदा सबै क्षेत्रको अनुभव हुन्छ, होइन र ?"

उपहासको साथ मेरो विचारलाई काट्दै भने—"हो, ज्यादै अनुभव हुन्छ ! त्यही अनुभव गराउन त लोकसेवाले भेटनरी डाक्टरलाई स्वास्थ्य-सेवामा खटाएको र हर्टिकल्चर पढेर आउनेलाई डिपार्टमेण्ट अफ कल्चरमा

खटाएको ।"

तीर्थजी लामो सास लिँदै गोजीमा चुरोट खोज्छन् । यत्तिकैमा विक्रमले आफ्नो गोजीबाट चुरोट निकालेर तीर्थजीलाई दिन्छन् । चुरोटको धुआँ कोठाभरि छर्दै उनी भन्दै जान्छन्—"तपाईंले यहाँ कस्तो बुझ्नु भएको छ कुन्नि ? मैले बुझेसम्म त यहाँ प्रशासनिक कुनै ठोस नीति नै छैन । निगाहामा बाँच्नुपर्छ ! कसले के गर्न सक्छ ? के गर्न सक्दैन ? कुनै छान-बीन छैन ! जसले जसलाई जे गरे पनि हुन्छ ! सुनवाई कहीं छैन ! साँच्चै भनुँ भने मलाई यहाँ नोकरी गर्ने मननै छैन !"

तीर्थ जस्तो एउटा देशको योग्य र जिम्मेदार व्यक्तिले यसरी असन्तुष्टी व्यक्त गरेकोमा मलाई नरमाइलो लाग्नु स्वाभाविक हो । यस अघि उनलाई मैले भेटेको पनि थिइन । यो पहिलो भेट-घाटमै उनले आफ्नू वह पोखे । हुनत उनको मनको पीर म कुनै प्रकारले पनि हटाउन सक्दिन । मात्र सुनेर उनीप्रति सहानुभूति जनाउने बाहेक मसँग कुनै उपाय छैन । यो कुरा उनले थाहा पाएर पनि उनी भन्दै जान्छन्—'मेरो पिताजीले मलाई भन्नुभएको थियो—यो नेपालमा बाँच्नलाई बाङ्गो रूखलाई सोझो भन्नुपर्छ र कालोलाई सेतो भन्नुपर्छ, तर तँ त्यसो नभनेस्—र उहाँले यो पनि भन्नुभएको थियो—अनुचित फाइदा उठाउने काम नगर्नु, त्यसबाट राष्ट्रलाई ठूलो घात पर्छ । यही उहाँका आज्ञालाई पालन गरी मैले आजसम्म कुनै अनुचित फाइदा उठाउने काम गरिन । जसको फलस्वरूप मेरो ग्रूपमा म सबै पक्षमा गिरेको छु ।"

बीचैमा विक्रमले भने—"अहो ! उहाँ इन्जीनियर साहेबको त के कुरा गर्नु ? मैले पनि ठेक्का पट्टाको काम गरेको दशौं वर्ष हुन लाग्यो । सयौं इन्जीनियर र ओभरसियरको संगत गरें तर उहाँ जस्तो भने पाइन । दादालाई थाहा छ मैले धनकुटाको अस्पताल भवनको ठेक्का लिएको ? जम्मा छः लाखको ठेक्कामा दुइ लाख पचास हजार त इन्जीनियरले मात्र लिए । म ठेकेदार मलाई नै त्यो भवन बनाएको चित्त बुझेको छैन । के गर्नु ? आफूले भने जस्तो नहुने । उनले सिकाए जस्तो नगरे भवन पास पनि

नहुने। उहाँ ईन्जीनियर साहेबलाई पनि यो सुनाइसकें। उहाँले मलाई भन्नुभयो—मबाट यो हुँदैन। ठीक छ ! उहाँले जे भन्नु हुन्छ हामीले गर्नु नै पर्छ।"

विक्रमको कुराको सिलसिलामा तीर्थजी मलाई सम्बोधन गर्दै भन्छन्—"म भवन अन्तरगत आजकल विक्रमजीले बनाउन लागेको भवनमा खटिएको छु। त्यस भवनको जगमा कंक्रिटिङ नगरी चार फीटको जगमा तीन फीट मात्र जग हालुँ, करीब चालीस हजार बचत हुन्छ, बीस हजार तपाईं लिनुहोस् –भनी उहाँले भन्दा म मानिन। कारण मैले यस्तो काम गर्ने विचार आफ्नू दिमागमा राखेकै छैन र आजसम्म गरिन पनि। यही मेरो कमजोरी भएको कारणले त कुनै योजनाको भाग मैले माथि पुऱ्याउन सकिन। मबाट उनीहरूहले केही प्राप्त गर्न सकेनन्। त्यसैले, म अयोग्य भएँ ! केही नजान्ने भएँ !!"

मैले उनलाई सम्झाउँदै भनें—"तीर्थजी ! यो त आ-आफ्नू प्रकृति र सिद्धान्तको कुरा हो। आज जस्ले अनुचित तरीकाले धन संकलन गरेका छन्। यो क्षणको लागि उनले आफूलाई खूबै बुद्धिमान र बाठो सम्झेका होलान तर त्यो दिन पनि आउँछ जुन दिन उनले शिर निहुराएर मर्नु पर्छ। तपाईंले आफ्नो पिताजीको आज्ञानुसार जो सिद्धान्त प्रतिपादन गर्नुभएको छ, त्यसमा तपाईंलाई आत्मगौरव हुनुपर्छ। सत्यनिष्ठा सधैंको लागि हुन्छ भने झूठ क्षणको लागि मात्र हुन्छ ! त्यसैले जो तपाईंले सत्यतालाई अँगाल्नु भएको छ, त्यो नै तपाईंको विजय हो, हार होइन। ठीक छ, तपाईंलाई केही दिन दुःख दिए। प्रमोशन भएन। एउटा स्थिर र स्थायी कार्य भएन। तथापि अधैर्य नहुनुहोस् ! त्यो दिन पक्कै आउँछ ! त्यस्ता अत्याचारीलाई प्रत्येक व्यक्तिले थुकेर समाज वहिष्कार गर्छन्। तिनका अनुहार र छातीमा खाली खुट्टाले कवाज खेल्छन् र तिनका प्रत्येक रगतका थोपासँग यहाँको माटोले बदला लिन्छ। त्यतिखेर तपाईं जस्तो इमान्दारको कदर हुन्छ।"

मेरो विचारलाई पुष्टिगर्दै विक्रमले भने—"हो, ठीक हो ! हरेक कुराको सीमा हुन्छ । सीमा नाघेपछि कसैले पनि सहन गर्न सक्दैन । यति भ्रष्टाचार भइरहेछ कि यो देशमा जो बताएर साध्य छैन । काम गर्नेले अलि-अलि खानु वा खान खोज्नु भन्ने कुरा साधारण हो । यहाँ त मूल बोटै उखेली जरै समेत खान थाले । कसैलाई कसैको डर भएन । हुनु पनि कसरी ? सबै खान व्यस्त छन्, शुद्ध कोही छैनन् ।"

ठेकेदारीको अवधिमा विक्रमले विभिन्न मनोभावना भएका मानिसहरू भेटेको हुनुपर्छ । उनलाई यहाँको वर्तमान स्थितिको पूर्ण ज्ञान छ । हुन पनि किन नहुनु ? कामदार र श्रमिकहरू बीचमा रही चौबीस घण्टा काम गर्नुपर्छ ठेक्काको काम पूरा गर्न कर्मचारीको चाकरी गर्नुपर्छ । फेरि यो भ्रष्टाचारको मूल पनि त ठेकेदारी हो । सानो ठेक्कामा हजारको भयो भने ठूलो ठेक्कामा करोड़को हुन्छ । त्यसैले विक्रमलाई यो सम्बन्धमा पूरा ज्ञान छ ।

म विक्रमलाई सम्बोधन गर्दै भन्छु—"भाइ, कुन त्यस्तो ठेक्कामा तिमीले बढ़ी फाइदा उठायौ ?"

"कुन भन्नु खै ? सानो-ठूलो गरी बीसवटा जति योजनाको काम गरें । धेरैमा त फाइदा भएन नै भने पनि हुन्छ । तीन-चारवटा योजनामा त सोचेको भन्दा पनि बढ़ी फाइदा भयो । त्यसैले सन्तुलनसम्म मिलेकै छ भन्नुपर्‍यो । जहाँसम्म बढ़ी फाइदा उठ्ने कुरा छ—त्यहाँ नैतिकता र इमान्दारीलाई छोड्नु पर्छ । फाइदै फाइदा छ ! यही योजना भन्ने कुरा छैन । आजसम्म मैले काम गरेको योजनामा उहाँ तीर्थ इञ्जीनियर साहेब बाहेक कोही इमान्दार देखिन । उहाँलाई 'इञ्जीनियरको अपवाद' भने पनि हुन्छ । अरू जति पनि इञ्जीनियर र ओभरसियर भेटें खाने दाउ बाहेक काम पटक्कै छैन । हामीलाई कम भन्दा कम खान दिएर आफू बढी भन्दा बढी खान्छन् । यसैले, कामको जिम्मेवारीको दृष्टिले विचार गर्ने हो भने—यसै योजनामा बढी फाइदा भयो भन्न सक्दिन, नगदको दृष्टिले भन्ने हो भने सबै योजनामा फाइदै छ ।"

विक्रमको कुरा बीचैंमा काट्दै तीर्थजी भन्छन्—"किन नकमाउनु ? जताततै कमाई नै कमाई छ ! ठेकेदारले होस्, इन्जीनियर एवं ओभरसियर होस् वा योजनासँग सम्वन्धित अरू अधिकारी र लेखापालले होस् सबै त कमाइकै फेरमा छन् । योजनाको लक्ष्य एकतर्फ हुन्छ भने त्यसलाई पूरा गर्ने जिम्मेवारी लिएकाको स्वार्थ अर्कोतर्फ हुन्छ । परिणाम योजना तहस-नहस हुन्छ । हेर्नुहोस् ! म दावाकासाथ भन्छु अहिले दश-पन्ध्र वर्ष यता अधिराज्यभरि जति पनि भवन वनेका छन्, ती भवनहरूको कुनै 'ग्यारण्टी' छैन । कुनै पनि समयमा चर्कनु, भत्कनुको साथै तुरुन्त पाताल हुन पनि सक्छ । तपाईंले हालसालै खवर पत्रमा छापिएको समाचार पढ्नु भएको अथवा सुन्नु भएको होला काठमाण्डूको एउटा भवनमा वसेको मन्त्रालय र त्यस अन्तरगतका कार्यालयहरू राता-रात त्यो भवन छोडी अर्को भवनमा सरे छन् । त्यो नयाँ भवन कुनै पनि समयमा भत्कने लक्षणहरू देखापरेका छन् । भन्नुहोस् ! कसले गरेको काममा को जिम्मेवार छ ?"

विक्रमले जानकारी पाएका रहेछन्, त्यस सम्वन्धमा । उनले तीर्थजीको भनाइमा सहमति जनाउँदै भने—"हो! त्यो भवन वारेमा मलाई पनि थाहा छ । करीव दश वर्षअघि मात्र सरकारी अमानतमा निर्माण गरिएको भवन हो । त्यस समयको खर्च र निर्माण भइसकेको भवन हेर्दा सयौं वर्ष केही हुन नपर्ने हो । अव यसवाट सहजै अनुमान गर्न सकिन्छ कि भवनमा निर्धारित लागतको पैंतिस प्रतिशत पनि लागेको छैन । वाहिरी रूपमात्र सिंगारेर चटक्क पारेको रहेछ । मैले पूरा अनुमान गरिसकें—भवनको कुन-कुन भागको काम नगरेर त्यवाट व्यक्तिगत स्वार्थ पूर्ति गरे ।"

ठेकेदार विक्रमलाई थाहा नहुने कुरै छैन । उनले सही ठेकेदारी गरेर कुनै हालतले पनि पैसा कमाउन नै सक्दैनन् । उनले वारम्वार मलाई भन्थे - के गर्नू दाइ ? यो काम छोडेर अर्को काम गर्नु पर्‍यो । यो चोरी लुच्याइँ काम गरेर कति दिन गर्ने ? टेण्डर लड्न गयो, सबै भन्दा घटी नभई टेण्डर पास हुँदैन । काम नपाएको झोंकमा घटी नै दर कायम गरेर पनि काम लिनै पर्‍यो । नक्सा इस्टिमेट अनुसार काम गरूँभने आफ्नू

घरको पैसा लाग्छ। अनि के गर्नु मनले नमानेर पनि देशलाई धोका दिनुपर्छ। समय-समयमा विक्रमले गरेका अरू कुरा पनि मलाई सम्झना आउँछ। एउटा ठेक्कामा उनले इन्जीनियरलाई मिलाउन नसकेकोले पचास प्रतिशत आफ्नू घर-घरानाबाट नोक्सान परेको कुरा पनि मलाई बताएका छन्। विक्रमलाई यो ठेकेदारी लाइनको पूरा अनुभव छ। एउटा योजनाबाट सम्बन्धित अधिकारीले कति पाउँछन्? लेखापालले कति पाउँछन्? ठेकेदारले कति बचाउँछन्?"

केही क्षणको मौनतापछि मैले तीर्थजीलाई सोधें—"तीर्थजी! तपाईंले धेरै कार्यलयमा काम गर्नु भएको रहेछ। तपाईंको अनुभवमा कुन चाहिं कार्यालय तपाईंको अनुकूल हुन सक्यो?"

मेरो प्रश्नले उनलाई अप्ठ्यारो पारे जस्तो लाग्यो। उनी निहुरिएर सोच्नलागे। फेरि मैले भनें—तीर्थजी, मेरो प्रश्न केवल······।"

मेरो कुरा टुङ्गिन नपाउँदै उनले भने—"होइन! यहाँलाई म भन्दै थिएँ। हेर्नुहोस्! साँच्चै भनूँ भने मेरो अनुकूल कुनै कार्यालय र योजना मैले पाइन। मैले अनुचित कामगरे सबै मसँग मिल्न सक्ने र सबैको लागि म राम्रो पनि। म तपाईंलाई स्पष्ट भन्छु—यो देशमा मेरो अनुकूलको कार्यालय पाइन र त्यस्तो कार्यालय छैन नै भने पनि हुन्छ। यसैले त कहिले काहीं मलाई लाग्छ—विदेशमा गई काम गरौं।"

उनी भन्दै जान्छन्—"हाम्रो देशमा जस्तो लूट त संसारको कुनै पनि मुलुकमा छैन। जति लुटे पनि छूट छ!"

मैले उनलाई संझाउँदै भनें—"यो चरम सीमामा पुगिसक्यो। यस-लाई कसैले सहन गर्न सकिरहेको छैन। यसको लागि विशेष व्यवस्थाको खोजीमा सबै लागिरहेका छन्। यसको अन्त हुने समय आइसकेको छ। तपाईंले जस्तै व्यक्ति-व्यक्तिले असन्तोप व्यक्त गर्न थालिसकेका छन्। यसको आयु लामो छैन।"

मेरो कुराको प्रतिक्रिया जनाउँदै विक्रम भन्छन्—"दादा! जो तपाईं भन्नु हुन्छ, त्यो हुन सक्दैन यो देशमा। यहाँको जनता हेर्नुहोस्, यहाँको हुने

  

खाने मानिसको मनोवृत्ति हेर्नुहोस् र जिम्मेवार अधिकारीको चित्तवृत्ति बुझ्नुहोस् । कुनै हालतले पनि यहाँ यसको अन्त हुँदैन । अझ यहाँ त होड़-बाजी चल्छ, कसले वढ़ी कमाउने भनेर । तपाईं कुन वर्गलाई वढ़ी नियन्त्रण गर्न सक्नु हुन्छ ? र कुन पक्षमा वढ़ी निगरानी राख्न सक्नु हुन्छ ? असम्भव ! तपाईंलाई हाम्रो समाजको जान्ने-सुन्ने व्यक्तिहरूको अन्तःकरणको अभिप्राय के छ ? थाहा छ ?—मेरो छोरो पढे लेखेर डाक्टर वनोस् या इन्जीनियर वनोस् । यदि प्राविधिक वन्न सकेको छैन भने प्रशासक वनेर धेरै पैसा कमाउने अड्डामा जावस् भन्ने हुन्छ । यसै अनुसार जो गएका छन् यो देशमा हुने-खानेको रूपमा गनिन पनि पुगेका छन् । अव तिनका छोरा-छोरीलाई पनि त्यही वाटो डोऱ्याउँदै छन् । जो क्रमवद्ध चल्दै-जान्छ । हेर्नुस् दादा ! कुनै पनि समाजमा धन हुनेको वढी वोलवाला चलेको हुन्छ । आजको समय धनको समय हो । तपाईंसँग धन छ भने सर्वशक्ति तपाईंसँग झुक्छ । म तपाईंको कुराप्रति विश्वस्त छैन ।''

मेरो साधारण विश्लेषणले जो देखें त्यो भने । विक्रमको तर्कपूर्ण कुरा-सँग म असहमत छैन । तथापि मलाई मेरो स्थिति विश्लेषण प्रति पनि पूर्ण विश्वास छ । आज मेरो घरमा तीर्थजी आएर जो अवस्था मेरो सामु राखे, निश्चय पनि यो सहन योग्य होइन । वर्तमान अवस्था, वास्तविकतामा निन्दनीय स्थितिमा पुगेको छ । सम्पूर्ण समाजले यो अवस्थालाई सहन सकिरहेको छैन ! गुम्सिएर रहन सकिरहेको छैन !!

तीर्थजी आफ्नू राय व्यक्त गर्दै भन्दछन्—''धेरै समयसम्म यही स्थिति रहिरहला भन्नेमा त म पनि विश्वास गर्दिन । यो वर्षाको भेल हो ! वर्षा-सम्म मात्र पानी धमिलो रहला । जव हिउँद आउँछ, आफैं निर्मल र कन्चन हुन्छ !''

मैले तीर्थको रायलाई पुष्टि गर्दै भनें—''ठीक भन्नुभयो तीर्थजीले ! जव चारैतर्फ पानीको अभाव र हाहाकार हुन्छ, सवै मूलहरू वन्द हुन्छन्, खोलसा र खहरेहरू सुकेर जान्छन् तव मात्र पानी निर्मल र शुद्ध हुन्छ ।''

यसै वीच तीर्थजी र विक्रमको लागि चिया आइपुग्छ । चियाको

साथमा तीर्थजी चुरोट सल्काउँछन्। केही क्षणको लागि मेरो ड्रइङ्ग रूम मौन छ। केवल चियाको चुस्कीको मधुर ध्वनि मात्र गुँजिरहन्छ। तीर्थजी चीया पिउँदा पनि केही सोचिरहेका छन्। म उनको अनुहार हेरेर सहजै अनुमान गर्न सक्छु कि उनी मसँग धेरै-धेरै आफ्ना व्यथा पोख्न चाहन्छन्।

चियाको कप टेबुलमा राख्दै विक्रम भन्दछन्—"यही विषयमा एउटा बडो रमाइलो घटना सुनाउँछु। कसरी चाँजो-पाँजो मिल्ने रहेछ? सुन्नु होस्! करीव चार वर्ष अगाड़िको कुरा हो। कर्णाली अंचलको एउटा जिल्लामा एउटा झोलुंगे पुल वनाउनु पर्ने रहेछ। काठमाण्डूवाट त्यस पुलको निर्माणको ठेक्का वन्दोवस्त भयो। करीव दश लाखमा मेरै साथी नजरमानले ठेक्का सकारे। त्यस योजनाको लागि एउटा ओभरसियर पनि खटिए। दुर्गम क्षेत्र भएको हुँदा ठेकेदारले केही पेश्की पनि पाए। वाँकी रकम ओभरसियर र दुइजना जनप्रतिनिधिको जिम्मा लगाई विभागले योजना शुरू गऱ्यो। ठेकेदार काटमाण्डूवाट वाहिर जानु परेन। ओभरसियर विदा मनाउन आफ्नो तराईको घरतर्फ तीन महीना वसेर आए। जनप्रतिनिधि प्लेन चढ़ी दुइ-तीन पटक जिल्ला ओहर-दोहर गरे। पुल वनेर मानिसलाई सुविधा भएको कुरा पनि रेडियोले जिल्ला समाचारमा प्रसारित गऱ्यो। फेरि पुल खोलाले वगाएको कुरा राजधानीवाट प्रकाशित हुने समाचारपत्रले छाप्यो। नजरमान समेत चार जनाले वरावर हिस्सा वाँड़े। पुल वनेको छैन भनेर कसैले प्रमाणित गर्न सक्ने कुरै भएन। पुल ठेक्का भएदेखि पुल वनेर खोलाले वगाएसम्मको प्रमाण सव दुरुस्त वनाएपछि कसले के गर्न सक्ने? यसरी प्रमाण पुऱ्याएर कार्य गरेपछि कसरी भ्रष्टाचार गरेको ठहर्छ?"

विक्रमको भनाइले तीर्थजीलाई नमिठो हाँसो फुटायो। विक्रमसँग यो विषयमा अझ जानकारी लिन तीर्थजीले सोधे—"होइन, ठेकेदार र ओभरसियर योजना स्थलमै नपुगीकन पैसा पचाए?"

"हो, किन पुग्नुपऱ्यो योजना स्थलमा, घरमा वसी-वसी सव प्रमाण वनेपछि? जनप्रतिनिधिले साविकको काठको साँधु खोलामा फालेर, साँधु

खोलाले बगाएको सर-जमीन मुचुलका तयार गरे। झूठ त कहाँ गरे र–सानो काठको पनि साँघु नै हो, ठूलो फलामको पनि साँघु नै हो ! साँघु खोलाले बगाएको पनि पक्कैहो !"

मैले जान्न खोजें—"त्यसो भए रेडियोको प्रसारण र समाचारको छपाई आधिकारिक समाचार होइन रहेछ ?"

"हो !"

"कसरी प्रसारण भयो त ?"

"जसरी पहिलेदेखि भइआएको छ।"

तीर्थजीले मलाई सम्झाउँदै भने—"हो ! यस्तो प्रमाण त मैले पहिले पनि पाएको हुँ। छोड़िदिउँ यो कुरालाई। म तपाईंहरूलाई अर्को रमाइलो कुरा सुनाउँछु। एक विभागले कुनै ठेकेदारलाई एउटा निश्चित ठेक्का पूरा गर्न सम्झौता गर्‍यो। काम शुरू पनि भयो। ठेकेदार विदेशी थियो। उसले सोच्यो, मौकाको फाइदा किन नउठाउनु ? 'यिनीहरूसँग पैसा छ, वुद्धि छैन।' यसै वीच मन्त्रालयमा आवेदन गरेर सचिवजीसँग साँठ-गाँठ मिलाएछ। दिनेले आफ्नू घरको सम्पत्ति दिनुपर्ने होइन। एक करोड़ रुपियाँ अर्कै विदेशी कम्पनीसँग ऋण झिकी ठेकेदारलाई मेशीन औजार किनिदिए छन्। सम्झौता शर्त अनुसार ठेकेदारले उक्त मेशीन औजार चलाएको वापत तोकिए वमोजिम वहाल वुझाउनु पर्ने रहेछ। नयाँ मेशीन औजार चलाई ठेकेदारले काम पूरा गरे। 'तिम्रो जुत्ता तिम्रै थाप्लोमा' भने जस्तो वहाल न सहाल, थोत्रो फलामे माल छोड़ी ठेकेदार चम्पत भएछन्।"

तीर्थजी भन्दै जान्छन्—"कति गरौं यस्तो कुरो, जति गरे पनि सकिंदैन। जता हेर्‍यो यस्तै छ। म खानेपानीमा छँदा त्यस्तै भयो। पानीको पाइप राख्नु पर्ने 'हेवि'; राख्छन् 'लाइट'; मतलव कम मूल्यको। किन यसो गरेको भन्दा—यो माटो मुनि रहने त हो नि, जस्तो राखे पनि केही वर्षमा फेर्नु नै पर्छ-भन्ने जवाफ पाएपछि के गर्ने ? मैले यही देखें–कसैमा पनि नैतिकता छैन। यहाँ केवल फटाहा लुच्चाले मात्र वस्ने ठाउँ रहेछ। म त अब विदेशतिरै गएर काम गर्छु।"

विक्रम वीचैमा वोल्छन्—"हाम्रो इन्जीनियर साहेव सबैं यही भन्नु हुन्छ। आखिर जहाँ गए पनि काम नगरी खान पाइने होइन। तपाईं जस्तो इंजीनियर यो देशमा थोरै छन्। तपाईंको जति यहाँ इज्जत हुन्छ अन्यत्र हुँदैन। तपाईं यहाँको हावामा मिल्नु भएको छैन। मिलेपछि छोड्न पनि सक्नु हुन्न।"

"हेर्नुहोस् विक्रमजी ! मैले आफ्नू नैतिकता वेच्ने हो भने पहिले नै वेचिसक्थें। आजसम्म आफूलाई वचाएर राखेको छु। म एक्लो परेकोले नै विदेशिन खोजेको हुँ। सुन्न र देख्न नपरेपछि सञ्चै हुन्छ।"

मैले तीर्थजीलाई सान्त्वना दिंदै भनें—"तपाईंले जो सोच्दै हुनुहुन्छ, त्यो तपाईंको कमजोरी हो ! तपाईं वस्नुपर्छ यही देशमा, त्यो तपाईंको जीत हो ! समयको प्रतीक्षा गर्नुहोस्, त्यो मौका जरूर आउँछ !"

उनी विस्तारै भन्छन्—"यहाँले ठीक भन्नु भएको हो ! तर के गर्नु ? दश वर्षदेखि विना धागोको चंगा भएर घुमिरहेको छु।"

यसै वीच विक्रम सोफावाट जुरुक्क उठी घडीतर्फ हेर्छन् र हतारिंदै भन्छन्—"अहो ! आज दोस्रो तल्लाको ढलानको लागि सिमेण्ट र छड़ ल्याउनु परेको थियो।"

मैले उनलाई भनें—"आज दिनभर फुर्सद लिएर आएको होइन र ? भरखर एक वज्यो, केको हतार ?"

"एक घण्टा जति नै वसिएला भनेर आएको तीन घण्टा भइसकेछ। मैले रुपियाँ छोडेको छैन। अरू इन्जीनियर भएको भए मसँग भएको तीन सय वोरा सीमेण्टले नै काम चलाउँथें। के गर्नु, तीर्थ इन्जीनियर साहेव मान्नुहुन्न। फेरि मलाई लप्पन-छप्पन गर्न मन पनि लाग्दैन।"

उनको कुरालाई जोड्दै मैले भनें—"हो नि ! थोरै सीमेण्ट प्रयोग गरेर ढलान गर्दा फर्मा झिक्दा ढलान ओइरियो भने अर्को आपत !"

उनले हाँस्दै भने—"ए, त्यस्तो त हुँदैन। पचहत्तर प्रतिशतसम्म सीमेण्ट कटाउँदा पनि ढलान त वस्छ, तर जति टिकाउ हुनुपर्ने हो त्यो चाहिं हुँदैन। तपाईंलाई साधारण नमूना दिउँ—कोठा या घरको प्लास्टर

गर्दा एक चारको हिसाबले सीमेण्ट लगाउनु पर्छ। तपाईं एक आठले लगाउनुहोस् त्यत्ति फरक पर्दैन। यसरी पचास प्रतिशत सीमेण्ट बच्न आउँछ। यो हिसाब ठेकेदारीको हो। आफ्नू घरमा भने प्रयोग गर्नु हुँदैन।"

विक्रम हतारिन थालिसके। म भने तीर्थजीसँग अझै केही कुरा गर्ने पक्षमा छु र तीर्थजी पनि मसँग कुरा गर्न उत्सुक देखिन्छन्। विक्रमलाई रोक्दै मैले चियाको बार हालें।

"ठीक छ, वरू चाँडो गरूँ।"—विक्रम फेरि सोफामा वस्दै भन्छन्—"तपाईंहरूको आज कुरा टुंगिएन भने अर्को दिन भेट-घाट गर्ने निश्चित गरौंला, हुन्न ?"

मैले तीर्थजीलाई सम्वोधन गर्दै भनें—"सबैभन्दा बढी खर्च गर्ने कार्यालय कुन कुन होला, यहाँलाई थाहा छ कि ?"

उनले तुरुन्त जवाफ दिए—"सड़क विभाग त हो नि। यो वर्षमात्र करीब पौने एक अरब रुपियाँ खर्च गर्ने निधो थियो।"

"कस्तो प्रगति भएको छ ?"

"कस्तो प्रगति भन्नु—ढाँटको निम्ती खाइपत्याएका छन्।"

"मतलव बुझिन मैले ?"

"कुरा सीधा छ। ठोस काम भएको कुनै देखिदैन। योजनाको रकम पचास प्रतिशत पनि योजनामा सदुपयोग हुँदैन, के भन्नु ?"

उनी फेरि भन्दै जान्छन्—"यसै विभाग अन्तरगत चलेको एउटा ठेक्का सम्वन्धमा तपाईंलाई वताउँछु। महेन्द्र राजमार्गको एउटा सानो खण्डलाई भएको बाटो वढ़ाई पिच गर्न एउटा विदेशी कम्पनीलाई नौ करोडको ठेक्का दिइयो। काम लिएको एक वर्षमा काम समाप्त गरी भुक्तानी लिई ठेकेदार हिंड्ने वित्तिकै वनाएको सबै जसो बाटो फुट्न र भत्कन थाल्यो। यस्तै छ! जहाँको वयान गरे पनि सकिदैन। सम्झँदै गयो झन् आफूलाई डाहा हुन्छ। देखेपछि भन्न मन लाग्छ। भने वैरी भइन्छ। यसैले त यहाँ मलाई वस्न मन लागिरहेको छैन।"

तीर्थजी मुस्केरा हाल्दै गोजीबाट चुरोट निकाल्छन् र सल्काउँछन्। चुरोटको धुआँमा आफ्नो आँखालाई अलमल्याएर बस्छन्। शायद हतारिएर होला विक्रम चिया चाँडो भन्न ड्रइंग रूमबाट बाहिर निस्के।

एक छिनमै विक्रम सँगसँगै तीन कप चिया हाम्रो टेबुलमा आइपुग्छ। म र विक्रम दुवैले चियाको कप समाप्तिसक्यौं। तीर्थजीको हातमा चुरोटको ठुटो सल्किनै रहेको छ। तीर्थजीलाई बिउँझाउँदै मैले भनें—"तीर्थजी ! चिया लिउँ। आज विक्रमलाई अबेर भएको छ। दुइ-चार दिनपछि धेरै समय बस्ने गरी आउनुहोस्। फेरि बसौंला !"

यो देशमा आफूलाई मिलाउन नसकेका तीर्थरत्नजी विदेशिने तरखरमा छन्। उनको प्रत्येक भनाइमा निराशा र असन्तोष व्याप्त छ। हुन पनि तीर्थजी जस्तो इमान्दार व्यक्तिको खाँचो, यो देशले बुझेको छैन अहिले। साथै तीर्थजीले यो देशमा आफ्नो मूल्य सम्झेका छैनन्। फेरि मैले भनें—"तीर्थजी ! दुइ-चार दिनपछि जरूर आउनु होला।"

दुवै नमस्कार गर्दै मसँग विदा हुन्छन्। तीर्थजीले पिएर उडाएको ड्रइंग रूम भरि छरिएको धुआँमा म एक्लै केही क्षणको लागि हराउँछु।



  

# शनिवार

म आज श्री पशुपतिनाथजीको दर्शनकोलागि विहानै घरवाट निस्कने तरखरमा छु। म पशुपति मन्दिरमा नगएको महीनौं भइसक्यो। दुइ वर्ष अघिसम्म म प्रत्येक हप्ता कमतीमा एक पटक जाने गरेको थिएँ। त्यो क्रम अविच्छिन्न रूपमा दश वर्षसम्म चल्यो। पशुपति नगएको हप्ता म आफैंलाई फिका लाग्दथ्यो। पशुपति गएपछि एक-दुइ घण्टा मन्दिरको वर-पर विताउने नियम नै वनिसकेको थियो। तर दुइ वर्ष यता म पशुपति मन्दिर गए कै छैन भने पनि हुन्छ। यो अवधिमा म मुश्किलले पाँच पटक मात्र पुगेको हुँला। हिजो-आज किन हो किन मलाई त्यस मन्दिरमा जाने फुर्सद पनि छैन र जाने रहर पनि मेटिएको छ। साँच्चै भनुँभने पशुपतिनाथजीको मलाई सम्झना नै आउन छोडिसकेको छ।

विहानको आफ्नो नित्य काम समाप्त गरी म पशुपतिनाथजीको मन्दिरमा जान तयार छु। वाहिर निस्कने वखतमा दैनिक आवश्यकताका सामानहरू किनमेल गर्न मैले आफ्नी श्रीमतीवाट प्रायशः एउटा सानो टिपोट र झोला पाउने गरेको हुन्छु। त्यही प्रतीक्षामा म ढोका नजीकै उभिएर वसें। मेरी श्रीमती आएर भनिन्—आज आमालाई भेटेर मात्र वाहिर जानुहोस्। श्रीमतीको हातमा झोला नभएको देख्दा म मनमनै खुशी हुन्छु आज किन-मेल रहेन छ भनेर। मलाई किन-मेल गर्न ज्यादै झंझट लाग्छ। किनमेलको टिपोट नलिई घरवाट निस्कन पाउँदा मलाई विशेष आनन्दको अनुभव हुन्छ। श्रीमतीलाई म सम्झाउन खोज्दीन उनले झोला र टिपोट कागज विर्सिएकोमा। म चुपचाप केही नवोली आमाको कोठातर्फ लाग्छु।

आमा मलाई देख्ने वित्तिकै भन्नु हुन्छ—"होइन, त्यो वाउ-वाजेको छालामा अर्कालि रजाइँ गरोस्? तिमीहरूलाई एक मिनटसम्म पनि फुर्सद

छैन ? साथी ठूलो वकील वनिसक्यो भनेको सुनेकी थिएँ। उनैसँग गएर पनि सल्लाह गरे हुने थियो । के गरेर खान्छौ, खै ?"

आमाले यो विषयमा मलाई धेरै पटक भन्नुभइसक्यो। मलाई फुर्सद थिएन र जान पनि सकेको थिइन। मलाई त्यो घडेरीको माया नलागेको होइन। भक्तपुर नगर क्षेत्र भित्रको त्यो घडेरी अहिले वीसौं हजार रुपियाँले पनि प्राप्त हुन सक्दैन। रुपियाँको मात्र कुरा होइन, आफ्नू वाउ-वाजेको सम्पत्ति मैले संरक्षण गरी नदिए आफ्ना सन्ततिले कसरी पाउँछन् ? मलाई सबै कुरा थाहा भएर पनि त्यो घडेरी रक्षा गर्ने तर्फ भने मैले आफ्नू पाइलो चालेको छैन।

लटँकुमार भनिने रत्नकुमारले आफ्नू 'घर पाताल' भनी त्यसै घडेरी मा घर वनाउन नक्सा पास गराइसकेको छ। म एक दिन आफैं गई घर वनाउन सम्म रोक लगाएर आएँ। मसँग त्यो घडेरीको कुनै प्रमाण कागज छैन। लटँकुमारसँग भने घर वनाउने नक्सा पास गरेको प्रमाण छ। छर-छिमेकी र सँधियारहरूले मेरो जग्गा होइन भनेर भन्न सकेका छैनन्। यसैको आधारमा मात्र मेरो जग्गा मेरो हातवाट फुत्कँदैन भन्नेमा म विश्वस्त छु।

म आमालाई सम्झाउँदै भन्दछु—"अस्ति गएर घर वनाउन रोकिहालें। आज भोलि फुर्सदै छ। अव वकील कहाँ गएर कानूनी सल्लाह गरी त्यही अनुसार आफ्नू जग्गा मिलाइहाल्छु नि ! किन धेरै चिन्ता गर्नु हुन्छ ?"

"देखादेख आफ्नू पुर्खाको सम्पत्ति अर्कोले खान लागिसक्यो ! अनि पीर नगरेर के गर्नु ?"

आमाको आशय हो—यसमा मैले दत्तचित्त दिएर चाँड़ो काम गर्नु। त्यसैले मैले आमालाई विश्वास दिलाएँ कि म आजै वकील कहाँ गएर कानूनी सल्लाह गर्छु।

सवेरै भएको हुँदा वाटोमा त्यत्ति धेरै मानिसहरू देखिदैनन्। सोचें—"पशुपतिनाथको मन्दिरमा आज होलैसँग दर्शन गर्न पाइएला। आज धेरै

दिनपछि म मन्दिर जाँदैछु। पशुपतिनाथ प्रति अगाध श्रद्धा र विश्वास छ मेरो हृदयमा। म उनका अनन्य भक्तहरू मध्येको एक हुँ। तर पनि यी दिनहरूमा मैले उनलाई सेवा पुन्याउन सकेको छैन। मेरो मन मरेर गएको छ, दिलमा श्रद्धा भएर पनि ! किन भने एक दिन उनको पुजारीले मसंग अप्रिय व्यवहार गरेका थिए। त्यसैले त्यस दिनदेखि उनको र मेरो सम्वन्धमा ह्रास आउन थालेको थियो। म आज भित्री हृदयदेखि प्रसन्न छु। महीनौंपछि मेरो मनमा पशुपतिनाथजीको दर्शन गर्ने इच्छा जागरण भएकोमा।

वत्तीसपुतलीको लामो बाटोको पछिल्लो किनारसम्म मेरो आँखाको पहुँच पुग्दछ। एकतर्फ लामा-लामा अकाशिंदै गएका रूखहरू देख्छु र अर्कोतर्फ झापा र मोरङका झोरा फाँडिए जस्तो नाङ्गो र छोटो ठुटाहरू मात्र देख्छु। मलाई पूरा सम्झना छ, करीव तेह्र वर्ष अगाडि मात्र वाटोको दुवै किनारमा एकै पटक वृक्षारोपण भएको थियो। दुवैतर्फ रूखहरू यसै गरी वढ़ेको भए यो वाटो कति सुन्दर हुन्थ्यो होला भन्ने विचार गर्दा गर्दै मेरो आँखा विद्युत् प्रसारण लाइनमा पर्छ। मैले यकीन गरें— विजुलीको तार माथिवाट हिंडेको हुँदा तलका वोट-विरुवा काटेको हुन सक्छ। मेरो मस्तिष्कमा एउटा कुराको यकीनको लागि अनेक प्रश्न आउँछन्—के यो वृक्षारोपण गर्दा यी विजुलीका खम्वाहरू थिएनन् ? विजुलीका खम्वा गाडिएकै थिए भने वृक्षारोपण अवस्थाका स-साना वोट-विरुवाहरू ठूला र अग्ला हुन्छन् भन्ने थाहा थिएन ? विद्युत प्रसारण लाईन र वृक्षारोपण लाईन कसरी एउटै रेखामा पर्न गयो ? मेरो गिदीले प्रश्नको जवाफ खोज्न भ्याउँदैन। निर्दिष्ट स्थान पुग्ने उद्देश्यले त्यही वाटोमा म लम्केर हिंडिरहेछु।

'एकाएक मेरो अगाड़ि साइकल रोकिन्छ। साइकल चालकले 'नमस्ते' भनेर मेरो अगाडि उभिएपछि मात्र म उनलाई चिन्छु। उनलाई देख्ने वित्तिकै मलाई आमाले अह्राउनु भएको काम सम्वन्धमा सम्झना हुन्छ। नमस्ते फिर्ता गरिसकेपछि म सोद्धछु—"विष्णुकान्तजीसँग अहिले

नौ वजेतिर कहाँ भेट हुन्छ ?"

सोमनाथले जवाफ दिए—"आफ्नै फर्ममा !"

"मलाई आज उनीसँग भेट्नु छ। म नौ वजेतिर आइपुग्छु भनेर भनिदिनुहोस् न ल !"

"हस, कता हिँड्नु भएको, टाढै ?"

"होइन, पशुपतिसम्म मात्र !"

सोमनाथ मसँग छुट्टिएर गए। म आफ्नू गन्तव्य स्थानतर्फ लागें। सोमनाथ विष्णुकान्तको सहायकको रूपमा काम गर्छन्। विष्णुकान्त नेपालका नाम चलेका वकील मध्येका हुन्। वकालत पेशा गरेको पन्ध्रौं वर्ष भित्रमा विष्णुकान्तले आफ्नू इज्जतलाई धेरै माथि उठाइसकेका छन्। जुन पायो उही मुद्दा लिदैनन्। जो लिन्छन् त्यसलाई सफल पनि वनाउँछन्। त्यसैले पनि उनी उच्चकोटिको वकीलको रूपमा चिनिन थालेका हुन्।

पशुपति मन्दिरको चोकमा मानिसको भीड़ छ। पच्छिम ढोकामात्र खुलेको हुँदा दर्शन गर्न नपाएर अलमलमा परेकाहरू त्यसै मोहड़ातर्फ रल्लिएर वसेका छन्। म पनि एक चक्कर लगाई औसर लिने फेरमा त्यसैतर्फ आएँ। आज विदाको दिन परेकोले होला यो भीड़ भएको। वड़ो मुश्किलले आफ्नू उद्देश्य पूर्ति गरी त्यहाँवाट हिंड़ें।

दिएको समयभन्दा केही मिनेट अगाडि नै म विष्णुकान्तको घरमा पुगें, जहाँ उनको आफ्नू निजी अफिस पनि छ। म उनको अफिस कोठामा प्रवेश गरी उनको टेवुलको छेउमा गई टुसुक्क मात्र वसेको छु। यसैवीच—

"वत्तीसका वत्तीस झारिदिन्छु यिनका दाँतहरू ! के खुत्ल्याउँछन् यिनले ?"—भन्दै विष्णुकान्त एक्कासी ममाथि खनिए।

विष्णुकान्त ममाथि रिसाएको आँखाले हेर्नलागे। मदेखि उनी रिसाउनु पर्ने कुनै कारण नै छैन। यसरी रिसाउनु पर्ने रहस्य मैले वुझिन। उनीसँग मेरो मित्रता भएको पनि पन्ध्रौं वर्ष भइसक्यो। उनको ठट्टा गर्ने वानीवाट म अनभिज्ञ छैन। तर यसरी रिसाएको भने मैले कहिले देखेको थिएन। आज यी विष्णुकान्तलाई के भयो ? मैले वुझ्न सकिन।

मैले केही भन्न नपाउँदै फेरि उनले आफ्नू सहायकलाई भने—"ए सोमनाथजी ! के हेरिरहेको, ल्याउनुस् न सनेसो ! फुकालिदिउँ यिनका दाँत ! खूबै मोतीका दाना जस्ता भनेर धक्कु लाउँथे। मोतीका दाना रहेछन् कि मकैका दाना रहेछन्, देखाइदिउँ !"

मैले विष्णुकान्तलाई सम्बोधन गर्दै विनम्रतापूर्वक सोधें—"होइन, विष्णु ! के भनेको तिमीले ? कसको दाँतको कुरा गरेको ?"

मतर्फ फरक्क फर्कदै मलाई नै खाउँला झैं गरी भने—"तिम्रा दाँत ! तिम्रा !!"

उनको झम्टाइबाट म पनि उत्तेजित भएँ। र उनको भनाइलाई आक्रमण गर्दै सोधें—"के भनेको तिमीले ? तिमी पागल त भएनौ ? के दाँतका कुरा गरिरहेको ?"

"हो, म पागल हो ! अरू केही भन्नु छ ?"—भन्दै फेरि उनले सोमनाथतर्फ फर्कदै भने—"के हेरिरहेको ? ल्याउनुहोस् न सनेसो ! तपाईंले कान सुन्नु भएन ?"

विष्णुकान्तको आदेशानुसार सोमनाथले सनेसो ल्याई टेबुलमा राखिदिन्छन्। विष्णुकान्त सनेसो दाहिने हातले समाउँदै भन्छन्—"तिम्रो अगाडिका माथिल्लो चारवटा दाँत झिकिदिन्छु—एक, दुइ, तीन, चार गरी गनेर चारवटा यो टेबुलमा राख्छु। तिमी मलाई के गर्न सक्छौ ?"

"तिम्रो काम अब केही भएन ? नचाहिंदो कुरा गर्न लाग्यौ ?"

"केही काम नभएर त तिम्रो दाँत झिक्न तम्सिएको म !"—भन्दै बायाँ हातले मेरो च्यापु समाउन आइपुगे।

विष्णुकान्तको यो तरीका देख्ने बित्तिकै मलाई झनक्क रिस उठ्यो। म जुरुक्क मेचबाट उठेर आफू पनि तयारी हुँदै भनें—"तिमीले के खोजेको, झगड़ा गर्न ?"

उनले आफ्नू जोशपूर्ण अनुहारलाई अलिकति घटाउँदै बिस्तारै भने—"होइन ! झगड़ा गर्न खोजेको होइन। केवल तिम्रो दाँत झिक्न खोजेको हो। जबरजस्ती अहिले म तिम्रो दाँत झिक्छु। तिम्रो दाँत झिके

वापत तिर्नुपर्ने दण्ड जरीवाना तिर्छु। यी दुइ सय चालीस रुपियाँ ठिक्क पारेर राखेको छु।"

टेबुलमा दुइ सय चालीस रुपियाँ र सनेसो साथसाथै छ। मेरो अगाडिको चारवटा दाँत, भनुँ सम्पूर्ण जीवनको सुन्दरता जसको मूल्य नै छैन, त्यसलाई दुइ सय चालीस मूल्य निर्धारण गरी विष्णुकान्त झिक्ने तरखरमा छन्।

यो वास्तविकता हो कि नाटक हो? मैले वुझ्नसकेको छैन। विष्णुकान्त-देखि मलाई रिस उठ्छ। म आवेशमा आएर उनलाई भन्छु—"तिम्रो दुइसय चालीस तिमी राख। मलाई आफ्नू सुन्दरता गुमाउनु छैन!"

म रिसाउने वित्तिकै विष्णुकान्तको अनुहार गम्भीर हुँदै आयो। मैले आफ्नू रिसलाई थाम्न नसकी उनलाई भन्दै गएँ—"तिम्रो दाँत झिक्छु र तिमीले दिने रकमभन्दा दश दोव्वर वढी दिन्छु! किन एउटा दाँतको साठी रुपियाँ मात्र? म तिमीलाई छः सय रुपियाँ दिन्छु! वेमतलवको दाँतको कुरा गरेर! म के काममा आएको थिएँ? कस्तो काममा आएको थिएँ? यत्रो जिम्मेवार मान्छे भएर नचाहिंदा कुरा गरेर वस्छौ!"

उनी गम्भीर र शान्त हुँदै एउटा फाइल पल्टाउन थाले। केही वेरसम्म म पनि मौन रहें। उनी विस्तारै हाँस्दै भन्न लागे—"यो फाइल यही केस सम्वन्धी हो। तिमी आउँछौ भनेर सोमनाथले खवर ल्याए। तिमीसँग केही उपाय पाउँछु कि भनेर वातावरणको मात्र सृजना गरेको हुँ। नराम्रो नमान! मैले त ठट्टा गरेको हुँ।"

उनले आफ्नू सफाइ पेश गरी नसक्दै एक अधवैंसे महिला हतारिंदै कोठाभित्र प्रवेश गर्छिन्। "म त मरें, वकील वाजे!" भन्दै मेरै नजीकैको मेचमा आई वस्छिन्। हामी सवैको ध्यान तिनीतर्फ केन्द्रित हुन्छ। उनी आफ्नू टाउको समाउँदै भन्न थालिन्—"फेरि मुद्दा हारियो! म के गरूँ? अव त म मरी गए पनि हुन्छ! अठार वर्षसम्म मुद्दा गरियो। जुन आशाले वचाएको थियो, त्यो पनि रहेन!"

विष्णुकान्त तिनको कुरा सुनेर आश्चर्य हुँदै भने—"के मुद्दा हारियो?

  

कसरी हरायो त ?"

ती महिलाले बिस्तारै भन्दै गइन्—"म र मेरो छोराले अंश नपाउने रे। —शुरू अदालतले अंश पाउने ठहराएको हो तापनि अंश पाउने भन्ने बदर ठहर्छ—भनेर फैसला गरिदियो। अब के उपाय छ, वकील बाजे ? भन्नुहोस् !"

विष्णुकान्तले महिलालाई सम्झाउँदै भन्न लागे—"यो क्षेत्रीयले हराउँदैमा मुद्दा बिग्रियो नै त भन्न सकिन्न। अझै जाउँ भने दुइ-तीन तह बाँकी नै छ। तर कानून बमोजिम तपाईंको लोग्नेको चल सम्पत्ति अंश-बण्डाको लागि दावी गरेर पाउन सक्नु हुन्न—जो कुरा तपाईंलाई मैले पहिले पनि भनिसकेको थिएँ।"

मैले विष्णुकान्तको कुरा बीचैमा काट्दै भनें—"के स्वास्नीले लोग्नेको चल सम्पत्ति अंश नपाउने ?"

"हो, चल-सम्पत्ति अड्डाले अंश दिलाइदिएको आजसम्म 'रेकर्ड' छैन।"

उपायको खोजी गर्दै ती महिलाले सोधिन्—"के त सर्वोच्चले स्वास्नी ठहराएर छोराको न्वारान गर्नु पर्ने गरेको फैसला बदर भयो त ? छोरा र स्वास्नी प्रमाणित गराउन तेह्र वर्ष लागेको यसै मेटियो त ?"

ती महिलाको कुरा म बिस्तारै बुझ्दैछु। चालीस वर्ष जति अड्कल गर्न सकिने ती महिलाले झण्डै उनका जीवनको आधा भाग अदालत धाएर नै बिताएकी रहिछन्। उनको लोग्नेले 'स्वास्नी होइन' भनेर निकालेपछि समाजको भनाइ जोगाउन र हकको लागि पनि अदालतको शरण लिन पुगिछन्। अठार वर्षसम्म पनि उनको हकको संरक्षण हुन नसकेकोमा स्वयं जिउँदै मरेको अनुभव गरेकी रहिछन्। कुरा गर्दै जाँदा बीच-बीचमा उनी भन्दै जान्थिन्—"अब म के गरूँ ? मरूँ ?" उनको प्रश्नको समाधान छैन। उनको प्रश्न प्रश्न नै रहन्छ।

विष्णुकान्त आज मसँग कुरा गर्ने अठोट बाँधेर बसेको हुँदा ती महिला-लाई भोलि बिहान आउने समय दिँदै बिदा गर्ने तरखरमा लाग्छन्। उनी

ती महिलालाई सम्बोधन गर्दै भन्दछन्—"दिदी ! धेरै पीर नगर्नुहोस् ! हुने हुनामी नभइ छाड्दैन। मैले तपाईंलाई जमान गरेको छु कि तपाईंको मुद्दा नसकिएसम्म म निःशुल्क मद्दत गर्छु। पीर नगर्नुहोस् ! आज म विचार गरूँ, भोलि विहान यही समयमा सल्लाह गरौंला।"

"हस, हजुरकै भरमा छु, है हजुर !"—भन्दै विष्णुकान्तलाई प्रणाम गर्दै कोठाबाट बाहिर निस्कन्छिन्।

सोमनाथले विष्णुकान्तलाई फाइल दिंदै भने—"यो भोलि दर्ता गर्नु पर्ने मुद्दा भएकोले आजै वादी लेखिदिनु पर्‍यो।"

"कुन मुद्दा ?"

"चावहिलको मेघराजको खुट्टा भाँचिएको मुद्दा !"

"ए, ल्याउनु होस्।"

विष्णुकान्त मतर्फ हेर्दै भन्छन्—"कस्तो-कस्तो मुद्दा हो ? कस्तो-कस्तो कानून हो ? म त बुझ्नै नसक्ने भइसकें। मानिस खुट्टा भाँचिएर अस्पताल-मा छ। अवधिभित्र मुद्दा दायर नगरेर पनि भएको छैन। फेरि कानून वमोजिम मुद्दा टुङ्गो लाग्दा पनि वादीलाई उनको खुट्टाको लाख गुना कम पनि फाइदा हुँदैन। यस्तो मुद्दा त मलाई हेर्नै मन लाग्दैन। आफ्नू पक्षलाई फाइदा नहुने मुद्दा के हेर्नु ?"

उनी मलाई सम्बोधन गर्दै फेरि भन्छन्—"हेर ! कथन्कदाचित् कुनै मूर्खले अंग-भंग गरिदियो भने अपङ्ग हुनु बाहेक अरू केही उपाय छैन।"

म कानूनका बुँदा-बुँदा बुझ्न सक्दिन। तथापि विष्णुकान्तको भनाइ चुपचाप सुन्न पनि सकिन र मैले जिज्ञासापूर्वक सोधें—"के अंग-भंग भयो भने कानूनले सुरक्षा गर्दैन ?"

उनले तुरुन्त उत्तर दिए—"सुरक्षा त किन गर्दैन ? सुरक्षा अवश्य गर्छ तर जति तिम्रो क्षति भएको हो त्यसको वरावर पुग्न सक्दैन।"

विष्णुकान्तको कुरा सुनेपछि मेरो शरीरको प्रत्येक अंग मैले असुरक्षित सम्झें। मेरो भित्री हृदयमा त्रास पैदा भयो—मलाई कोही मानिसले दाँत झारिदियो अथवा हात-खुट्टा भाँचिदियो भने म उपायरहित रहेछु। म

अपङ्ग बन्नु पर्ने रहेछ.........!"

कानून र व्यवहारमा आएको अन्तर सम्बन्धमा विष्णुकान्तले मलाई धेरै सम्झाए। धेरै-धेरै समस्याहरू मेरो अगाडि राखे, जो उनले वर्तमानमा भोगिरहेका छन्। उनको भनाइ रहेछ—व्यवहार र कानूनमा सामञ्जस्य ल्याउन पर्‍यो। उनले देखाएका समस्यै-समस्याले मलाई उनीसँग प्रश्न गर्न बाध्य गरायो। त्यसैले मैले उनलाई प्रश्न गरें—"तिमी समस्या मात्र अगाड़ि राख्छौ कि समाधान पनि छ ?"

मेरो प्रश्न सुन्ने वित्तिकै विष्णुकान्त नरमाइलो किसिमबाट भन्दै जान्छन्—"तिमीलाई थाहा छ ? अशुद्धता त्यतिखेर मात्र खुट्टिन्छ जति-खेर शुद्धताको जानकारी हुन्छ। प्रत्येक समस्याको पछाडि समाधान छ। प्रत्येक त्रुटिको पछाडि सुधार या पूरक छ। मुख्यतः यसलाई पैलाउन गाहारो छ।"

स्पष्ट रूपले अझ म बुझ्न सक्दिन, उनले के भन्न लागिरहेका छन्। बुझ्दै नबुझेर पनि बुझ्ने चाख छैन ममा। म केवल उनीकहाँ मेरो घडेरी अर्कालि बेदखल गरेकोमा कानूनी सल्लाह लिन गएको थिएँ, जो मैले एक-दुइ पटक भनिसक्दा पनि विष्णुकान्तले ध्यान दिएका छैनन्।

विवादको विषय बदल्न चाहेर मैले उनलाई भने—"आजकल कत्तिको अदालत जान्छौ ?"

"के जानु अदालत ? एउटा मुद्दा बहस गर्न महीनौं धाउनु पर्दछ। कुनै दिन यस्तो छैन मुद्दा पेशी गरिएको दिन मुद्दा हेरिएको होस्। दिन-भरि अदालतको चौरमा घाम ताप्यो, साँझ घर फर्कियो। अदालत गइन्छ भन्नु कि गइन्न भन्नु ? यस्तै छ !"—मैले कुनै शब्द बोल्न नपाउँदै उनी फेरि भन्दै जान्छन्—"के गर्नु अदालत गएर ? प्रायः यस्तो मुद्दा छैन जो अर्को तरहले विपरीत निर्णय नलिइएको होस्। सुनेको थिएँ—राणाको पालामा डिठ्ठा, विचारीहरूले न्याय दिंदा बड़ो विचार पुर्‍याई जाणीरलाई नै साक्षी राखी न्याय दिन्थे रे ! कारण उनीहरूले छिनेको मुद्दा पाँच प्रतिशत मात्र उल्टियो भने पनि पगरी बुझाउनु पर्थ्यो रे ! आज त्यो छैन !

शतप्रतिशत मुद्दा उल्टे पनि केही फरक पर्दैन। एक मुद्दा अन्तिम भई पूर्ण निर्णयमा पुग्न दश बाह्र वर्ष लाग्नु साधारण हुन लागिसक्यो। के गर्नु? मनले नमानेर पनि अदालत जानै पर्छ। जो पेशा अपनाइयो त्यसलाई छोड्न पनि सकिदैन। साथै कानूनी राज्यमा कानूनको मर्यादा राख्नु पर्छ। जस्तोसुकै त्रुटी भए पनि सहन गर्नु नै पर्छ। फेरि आफ्नू पेशा पनि यस्तै भयो। त्यसैले जस्तो सुकै भए पनि अदालत जानैपर्छ।"

विष्णुकान्तको मनभित्र गुम्सिएर बस्न नसकेका मनोव्यथा मैले सुन्ने नै निश्चय गरें। उनको अभिप्राय पनि यही छ कि मैले सुनुँ। मलाई थाहा छ—उनले पोखेका मनोविश्लेषणले उनलाई शान्ति प्राप्त हुन्छ।

विष्णुकान्त मेरो पुरानो साथी मध्येका हुन्। केही वर्ष अघि एउटै संस्थामा बसी कार्य गरेको हुँदा हामी दुइ ज्यादै नजिकिन पुगेका हौं। केवल उनी र म मात्र मित्र होइनौं हाम्रो दुवै घरको परिवारहरूको पनि एक अर्कासँग त्यत्तिकै मेल छ। हामीले एक अर्काको सहयोग निःस्वार्थ गर्ने गरेका छौं।

यसै बीच एक जना नौलो मानिस कोठामा प्रवेश गर्छन्। विष्णुकान्त-लाई नमस्कार गर्दै उनको टेबुलको छेउ अर्थात् मेरो ठीक सामुन्नेको मेचमा बस्दै भन्दछन्—"बड़ो दुःख पाइयो वकील साहेब! सर्वोच्चले हिजो हराइदियो!"

विष्णुकान्त अनौठो मान्दै भन्दछन्—"के! हराइदियो? हार्नै नपर्ने मुद्दा।"

"यही आशामा बाह्र वर्ष गुज्रियो। हार्नै नपर्ने मुद्दा! मेरो पुर्खाको पालादेखिको हिंडिरहेको बाटो, छर-छिमेकी सबैलाई थाहै भएको कुरा हो। के गर्नु?"

मलाई सम्बोधन गर्दै विष्णुकान्त कुर्लिन्छन्—"लौ हेर्नुहोस्! उहाँको मुद्दा क्षेत्रीय अदालतमा जितेको, कानूनन् अन्तिम निर्णय नै भएको हो। फेरि अनुमतिबाट हराइदियो।"

बीचैमा ती अपरिचित मानिस भन्दछन्—"मात्र क्षेत्रीय अदालतबाट

जितेको हुँ र ? शुरूको जिल्ला अदालतवाट पनि त जितेको हुँ। अंचलले पनि मेरो बाटो नै होइन त भन्न सकेन। केवल पर्खाल लगाइसकेको हुँदा बाटो खोल्न नमिल्ने सम्म न भनेको हो। सोह्रै आना मेरो सनातनको बाटोलाई बाटो नै होइन भनेर हिजो फैसला गरिदियो। अव भन्नुहोस् वकील साहेव ! के गर्ने ?"

विष्णुकान्तले ती व्यक्तिलाई सोधे—"तपाईंको उमेर कति भयो बा ?"

"अब यो ज्येष्ठले छपन्न लाग्छु।"

"तपाईंको यो झगड़ा शुरू हुँदा कति उमेर थियो ?"

"पैंतालीस वर्षको थिएँ।"

"अव वाह्र वर्षपछि टुंगो लाग्यो भने तपाईं कति वर्षको हुनुहुन्छ ?"

ती व्यक्ति झर्कंदै विष्णुकान्तलाई भन्छन्—"के भनेको वकील साहेव ? वाटो नै छोड़िदिउँ ? अव मेरो पक्षमा न्याय नै हुँदैन त ?"

विष्णुकान्त सम्झाउँदै भन्दछन्—"न्याय हुँदैन भनेर म कसरी भन्न सक्छु ! न्याय व्यवस्था प्रभावकारी वनाउन कैयौं सिद्धान्तहरू प्रतिपादन भइराखेका छन्। न्याय सुलभ वनाउन अनगिन्ती प्रयोगहरू भइरहेछन्। न्याय सुधार गर्न विभिन्न आयोगहरू वनिरहेका छन्। यो कानूनी राज्यमा न्याय पाइँदैन भनेर भन्न सकिन्न। न्याय जरूर पाइन्छ, तर कसरी पाइन्छ त्यो तपाईंले भोग्नु भएको छ।"

म प्रति संकेत गर्दै उनी भन्दछन्—"अदालतमा मुद्दा जानुको अर्थ हो घटीमा पाँच वर्षको अमूल्य समयलाई नष्ट गर्नु। त्यो पनि सानो-तिनो मुद्दा भयो र झगड़ियाले धेरै ताकिता गरे भने। होइन त भने मुद्दाको लागि दश-वीस वर्ष भनेको त मामूली हो। अहिले पनि चौवीस वर्षको दुइटा मुद्दा र पच्चीस वर्षको एउटा मुद्दा मेरो फर्ममा दर्ता छ। भन्नुहोस्, आजको जस्तो समयमा मानिसले यति लामो अवधिसम्म मुद्दामा अल्झि-रहनु पर्दछ····।"

वीचैमा कुरा काट्दै ती अपरिचित व्यक्ति भन्दछन्—"न्याय व्यवस्था त राणाकै पालामा राम्रो थियो। अरू विषयमा तिनीहरूले जेसुकै गरेको

भए पनि न्याय दिन भने पछि हट्दैन थिए। न्यायको लागि त स्वर्णिम युग भने पनि हुन्छ। आज बाह्र वर्षमा नटुंगिएको काम बाह्र मिनेटमा टुंगो लाग्दथ्यो।"

उनको कुरा काट्दै मैले भनें—"त्यो समयमा थोरै मानिस थिए। थोरै मुद्दाहरू हुन्थे। फेरि त्यो हुकुमी शासन। उनले बोलिदिए पुग्दथ्यो। अहिले त त्यो सम्भव छैन र हुँदैन पनि।"

"गरे किन हुँदैन ? धेरै मानिस छन् र धेरै मुद्दा छन् भने धेरै अड्डा अदालत पनि त छन्। यहाँ गरिने तरीका नै ठीक छैन। तपाईंले सुनिहाल्नु भयो मेरो मुद्दा परेको बाह्र वर्ष भयो। यो अवधिभित्र अड्डा अदालत धाउँदा, वकीललाई दिंदा कति खर्च भयो होला ? वकील साहेबको अहिलेको भनाइ अनुसार अझ बाह्र वर्षमा पनि टुङ्गो लाग्ने स्थितिमा छैन। यसरी युगौं युगसम्म अदालत मात्र धाउनु पर्ने कस्तो हो यो परिस्थिति ?"

म जुन कामले विष्णुकान्तकहाँ आएको थिएँ, त्यस विषयको मैले कुरा नै गर्न पाएको छैन। मैले घड़ी हेरें। म आएको धेरै नै समय भइसकेको रहेछ। विष्णुकान्ततर्फ फर्कंदै विस्तारै मैले भनें—"विष्णु ! म केही कानूनी सल्लाह लिउँ भनेर तिमीकहाँ आएको।"

उनले हतारिंदिंदै भने—"अघि नै किन नभनेको ? भन ! भन !!"

"अघि नै कसरी भन्ने ? आउने वित्तिकै नाटक देखाउन थालिहाल्यौ।"

"छोडिदिउँ यो कुरा ! मैले सोचें—तिमी यहाँ कुरा गर्न आएका। भन, कस्तो कानूनी सल्लाह चाहियो ?"

"मेरो नगर क्षेत्रभित्र करीब दुइ हजार स्क्वायर फीटको घडेरी जग्गा छ। पहिले पुर्खाको पालामा घर थियो रे। हाल घरको चिन्हसम्म त देखिन्छ नै। शहरी क्षेत्रभित्र पहिले कुनै तिरो तिरान थिएन। तिरोतिरान नभएपछि कुनै कागजी प्रमाण हुने कुरा पनि भएन। यो पछिल्लो नापीमा घर पाताल मात्र जनाई नापी भएछ। त्यो नापी हुँदा कसैलाई

कुनै वास्तै नराखी नापी भएको तिमीलाई पनि त थाह छ। त्यसैले, त्यसमा कसैको नाम पनि जनिने कुरा भएन। अब अहिले आएर एक जनाले 'यो मेरो घर पाताल हो' भनी घर बनाउन नक्शा स्वीकृत गराई ल्याएछ। साँध सीमानाका मानिसहरू मकहाँ आई खबर गरे। खुद मेरो पूर्खाको सम्पत्ति अर्काले खान लाग्यो। यसमा केही उपाय छ कि ?"

मेरो कुरा सुनेपछि विष्णुकान्तले ओंठ लेप्राउँदै भने—"तिम्रो भन्ने कुराको प्रमाणै छैन। थियो अरे—भनेको भरमा मुद्दा जित्ने पनि कुरा छैन। हुन त जसले घर बनाउन नक्शा पास गऱ्यो त्यसको पनि त्यो जग्गामा प्रमाण छैन होला। किनभने वास्तविकतामा त्यो जग्गा तिम्रो हो। मुद्दा गर्न सकिन्छ र मुद्दा लाग्छ पनि तर तिम्रो आफ्नो जग्गा आफ्नो गराउन दश पन्ध्र वर्ष लाग्छ। समय मात्र लागेर त केही छैन। पैसा पनि लाग्छ। मेरो विचारले त छोड़िदेउ।"

"के मैले छोड़नु ? मेरो पुर्ख्यौली सम्पत्तिमा अर्काले घर बनाओस् ! के भनेको ?"

"बनाउन देउ ! दुइ हजार स्क्वायर फीटको जमीनको लाणि बीसौं हजार नगद लाग्छ। त्यति खर्च लागेर पनि पछि तिम्रै पक्षमा निर्णय हुनुपर्छ भन्ने कुनै 'ग्यारेण्टी' पनि छैन। तिमी आफैं भन्दैछौ प्रमाण छैन। अनि कसरी हुन्छ ?"

"तिमीले कस्तो कुरा नबुझेको ! काठमाण्डू उपत्यका भित्रको शहरी क्षेत्रमा पहिले तिरो थिएन। अनि कसरी प्रमाण हुन्छ ? मेरो हो भन्ने कुरा त्यहाँका साँध-सँधियार र छर-छिमेकीले बताइहाल्छन् नि।"

"जतिसुकैले बताउन्। तिम्रो प्रमाणित नहुन पनि सक्छ। कति तह छ अदालतको ? तिमीलाई थाहै हुनुपर्छ। झोंक या आवेशमा आएर मुद्दा दायर गर्न सजिलो छ तर त्यसको परिणाम सहन गर्न गाह्रो छ। म त तिमीलाई मित्रको नाताले सल्लाह दिन्छु—छोड़िदेउ।"

म कत्रो उत्साह लिएर विष्णुकान्तकहाँ आएको थिएँ। मेरो मित्र कानून व्यवसायी छ भन्ने मलाई कत्रो घमण्ड थियो। मेरो विश्वासमा

आँच आयो। उनको सल्लाहको विपरीत गई वहस गर्नु पनि मुनासिव देखिन। मात्र मैले उनलाई सोधें—"के छोड़ि नै दिनु त ?"

उनले भने—"विर्सनुमा कल्याण छ ! यो वुझ तिमी—जसको हातमा लौरो हुन्छ, उसैको हुन्छ वस्तु।"

घडीतर्फ नजर वढाउँछु, दिनको वाह्र वज्न लागिसकेको रहेछ। समय धेरै वितिसकेको हुँदा फेरि अर्को दिन आउने विश्वास दिलाउँदै विष्णुकान्तसंग म विदा लिन्छु।

मध्य दिन छ। शून्य वाटोलाई आफू पछाडि छोड़दै म घरतर्फ वढदैछु। मलाई एक एक गरी सम्झना आउँदै जान्छ—विष्णुकान्तले गरेको अभिनय, उनका कार्यालयको कुराकानी र मलाई विष्णुकान्तले दिएको कानूनी सल्लाह। सम्झँदै जाँदा मलाई झन् त्रास वढ्दै जान्छ। कतै केही म सुरक्षा देख्दिन। सवैतिर अँध्यारो नै अँध्यारो देख्छु।

मेरा सवै साँझ र विहानहरू चीलको पन्जाभित्रको चल्ला जस्ता छन् ! मेरा सवै दिनहरू भोको गिद्धले घेरेको सिनोहरू जस्ता छन् ! यस्तो असह्य परिस्थितिमा लपेटिएको मेरा वर्तमानका कथाहरू कहिल्यै नटुँगिने क्षितिज जस्ता छन् !!

❋ ॐ शिवम् भूयात् ❋



---

यो उपन्यासका पात्र र घटनाहरू सवै काल्पनिक हुन्।



लेखक

## यसै पुस्तकबाट-

- मेरो आँखा अगाडि जीवनजस्ता मेरा सयौं दौंतरीहरू खेल्न थाल्छन्। कहाँ छन् ? के छन् ? कस्तो स्थिति छ ? कसरी सहन गर्दछन् ? आदि आदि प्रश्नले मेरो रित्तो छाती कोरिन्छ र म एउटा सिङ्गो प्रश्न बन्ने अठोट गर्छु यो वर्तमान समाजमा।

- यो कानूनी राज्यमा न्याय पाइन्न भन्न सकिदैन। न्याय अवश्य पाइन्छ, तर कसरी पाइन्छ त्यो तपाईंले भोग्नुभएको छ।

- जब चारैतर्फ पानीको अभाव र हाहाकार हुन्छ। सबै मूलहरू बन्द हुन्छन्, खोल्सा र खहरे सुकेर जान्छन् तबमात्र पानी शुद्ध र निर्मल हुन्छ।

- जागीर खाएपछि सूझबूझलाई बिर्सेर आज्ञाको पालन गर्नुपर्ने रहेछ।

- नियम र ऐनको व्यवस्था केवल पुस्तकको शोभा मात्र हो ?

- म हुत्तिन्यें—एउटा सिकारू खेलाडीको खुट्टाबाट फूटबल हुत्तिए जस्तो।

- निरपेक्ष गरीबीको रेखामुनि यहाँ अस्सी प्रतिशत छन्।

- सत्यनिष्ठा सधैंको लागि हुन्छ भने झूठ क्षणको लागि मात्र हुन्छ।

- अशुद्धता त्यतिखेर मात्र खुट्टिन्छ जतिखेर शुद्धताको जानकारी हुन्छ।